प्राथमिक तहमा कार्यरत शिक्षकहरुका लागि

उच्चमाध्यमिक शिक्षा परिषद्बाट स्वीकृत उच्च माध्यमिक तहको

विशेष पाठ्यक्रममा आधारित

## परीक्षा सहयोग सामग्री

# शिक्षाको परिचय



नेपाल सरकार

शिक्षा मन्त्रालय

शैक्षिक जनशक्ति विकास केन्द्र

सानोठिमी, भक्तपुर

२०६८

# विषयसूची

एकाइ : एक

# शिक्षाको धारणा र कार्य

(Concept and Function of Education)

## १. एकाई परिचय

यस एकाइमा खासगरी शिक्षाको अर्थ, यसको छोटकरी विकास क्रम, शिक्षाको कार्यहरू, शिक्षाको प्रकृति यसको प्रकार साथै शिक्षाको व्यक्तिगत र सामाजिक लक्ष्यको बारेमा बर्णन गर्न खोजिएको छ । यस एकाइको पाठ्यभार २५ घण्टा तोकिएको छ । यसै कुरालई ध्यानमा राखी बिद्यार्थी एवम् शिक्षकले अध्ययन अध्यापन गर्दा आफ्नो लक्ष्य पुरा गर्न सजिलो पर्दछ । त्यसैले यहां यो सामग्री बिद्यार्थीलाई केन्द्रबिन्दु मानी तयार पारिएको हुंनाले यहां यस एकाइमा समाबेश गरिएका बिषयवस्तु, ती बिषयवस्तुहरूको छोटकरी व्याख्या, एबम् परीक्षामा सोध्न सकिने सम्भाव्य प्रश्नहरू समेत समाबेश गरिएको छ ।

यस एकाइमा समाबेश गरिएको बिषयवस्तुहरू निम्न लिखित रहेका छन् :

१. शिक्षाको अर्थ (Meaning of Education)
   - (क) शिक्षाको शाव्दिक अर्थ (Etymological Meaning of Education)
   - (ख) शिक्षँको शंकुचित अर्थ (Narrow Meaning of Education)
   - (ग) शिक्षँको व्यापक अर्थ (Broader Meaning of Education)

२. छोटकरीमा शिक्षँको विकास (Evolution of Education in Brief)

३. शिक्षँको कार्यहरू (Function of Education)
   - (क) शिक्षाको सांस्कृतिक कार्य (Cultural Function of Education)
   - (ख) शिक्षाको आर्थिक कार्य (Economic Function of Education)
   - (ग) शिक्षँको नागरिक कार्य (Civic Function of Education)
   - (घ) शिक्षाको बिश्वव्यापी कार्य (Global Function of Education)

४. शिक्षाको प्रकृत्ति (Nature of Education)
   - (क) साधारण र बिशिष्ट (General and specific)
   - (ख) प्रत्यक्ष र अप्रत्यक्ष (Direct and Indirect)
   - (ग) व्यक्तिगत र सामुहिक (Individual and Collective)

५. शिक्षाको प्रकारहरू (Types/Forms of Education)
   - (क) औपचारिक शिक्षँ (Formal Education)
   - (ख) अनौपचारिक शिक्षँ (Non-Formal Education)

(ग) अनियमित शिक्षँ (Informal Education)

६. शिक्षा उद्देश्यहरू (Aim of Education)

(क) शिक्षाका व्यक्तिगत उद्देश्य (Individual Aim of Education)

(ख) शिक्षाका सामाजिक उद्देश्य (Social Aim of Education)

## २. एकाइको मूलभूत सार

अव यहां हाम्रो पाठ्यक्रममा समाबेश गरिएका माथिका बिषयवस्तुको बारेमा छोटकरीमा बर्णन गरिएको छ । जुन यस तहमा अध्ययन गर्ने सिकारुलाई एक खुराकको काम गर्नेछ ।

### २.१ शिक्षाको अर्थ (Meaning of Education)




माथिको चित्रबाट प्रष्ट हुन्छ कि शिक्षाको अर्थ भन्दा शिक्षाको शाव्दिक अर्थ, शंकुचित अर्थ र व्यापक अर्थ हो भन्ने बुझ्नु पर्दछ । जसको छोटकरी बर्णन तल गरिएको छ ।

मानव-सभ्यताको विकास जुन बेलादेखि भयो त्यस बेलादेखि शिक्षाको पनि प्रारम्भ भएको पाइन्छ । शिक्षालाई ज्ञान आर्जन गर्ने माध्यमको रूपमा लिइएको छ । त्यसकारण शिक्षा भनेको कुनै पनि रूपमा ज्ञान प्राप्त गर्नु हो । मानव-जीवनको जुनसुकै पक्षमा होस् उसले ज्ञान प्राप्त गर्दछ भने त्यसलाई शिक्षा मान्न सकिन्छ । त्यसर्थ शिक्षा भनेको पशुतुल्य मानिसलाई संसारकै सर्वश्रेष्ठ व्यक्तिका रूपमा स्थापित गराउने साधन हो । शिक्षालाई मानिसले विभिन्न दृष्टिकोणले हेरेको पाइन्छ । जस्तै- आर्थिक दृष्टिकोणले हेर्दा यसलाई आर्थिक दक्षता बढाउने साधनका रूपमा लिन सकिन्छ । सामाजिक दृष्टिमा समाजलाई अघि बढाउन प्रयोग गर्ने साधनका रूपमा हेरिन्छ भने दार्शनिक दृष्टिमा हेर्दा शिक्षा मानवीय चिन्तन र सत्यको खोजीका रूपमा लिन सकिन्छ । आखिर शिक्षालाई जुन-जुन दृष्टिकोणले हेरे पनि यो मानव-जीवनको अति आवश्यक मानवलाई सभ्य बनाउने एक चलायमान साधन हो । शिक्षा एउटा जीवनपर्यन्त र निरन्तर रूपमा चलिरहने प्रक्रिया हो । त्यसैले भनिन्छ शिक्षा कोक्रोबाट सुरु भै चिहानमा अन्त्य हुन्छ । ["Education begins from cradle and ends to the grave." - Dumvile] तसर्थ शिक्षाको महत्व मानव-जीवनमा अति नै रहेको छ । शिक्षाबिना मानव-जीवन अपूरो रहन्छ । शिक्षाको महत्व दर्साउँदै

प्रसिद्ध दार्शनिक John Locke ले भनेका छन्- "बोटबिरुवाको विकास गोडमेलद्वारा हुन्छ भने मानिसको विकास शिक्षाद्वारा ।" [Plants are developed by cultivation and man by education.] त्यस्तै John Dewy को भनाइअनुसार- "Need food for physical development and education is for social growth." यसबाट पनि यो प्रस्ट हुन्छ कि शिक्षाको आवश्यकता व्यक्ति र समाज दुवैको सम्पूर्ण पक्षको विकासका लागि पर्दछ । यसको प्रयोग पनि समय, परिस्थिति र आवश्यकताअनुसार फरक-फरक रूपमा हुन सक्दछ, त्यसकारण शिक्षाको अर्थको व्याख्या पनि साँघुरो घेरा वा सोचाइका आधारमा गर्न सकिँदैन तसर्थ विभिन्न परिवेशबाट शिक्षाको अर्थ यसरी अर्थ्याउन सकिन्छ :

(क) **शिक्षाको शाब्दिक अर्थ** (Etymological Meaning of Education)

नेपाली शब्द 'शिक्षा' संस्कृत भाषाको 'शिक्ष्' धातुबाट आएको हो । शिक्ष्को अर्थ नेपालीमा सिकाउनु हो अर्थात् शिक्षाको अर्थ हो प्रत्येक व्यक्तिमा ज्ञान, गुण र सीपको विकास गराउनु, जसबाट प्रत्येक व्यक्तिले अनुशासित एवम् नियन्त्रित रूपमा जीवनयापन गर्न सक्षम हुन्छ । अङ्ग्रेजी शब्द 'Education' ल्याटिन भाषाको विभिन्न शब्दहरूबाट आएको हो, जस्तै- Educatum, Educere, Educare etc. Educatum दुईवटा शब्द 'E' र 'Catum' मिलेर बनेको हो । E को अर्थ हुन्छ Internal (भित्री) वा Out of र Catum को अर्थ अगाडि बढ्नु, अग्रसर हुनु हुन्छ । तसर्थ Educatum को अर्थ हुन्छ- Act of Teaching ( शिक्षणकला) । यसप्रकार बालकमा रहेको शैक्षिक, नैतिक जस्ता अन्तर्निहित शक्तिलाई बाहिर ल्याई उसको सर्वाङ्गीण विकासमा लगाउनुलाई शिक्षा भनिन्छ । Educare 'E' र 'Ducere' शब्द मिली बनेको छ । E को अर्थ Out of र Ducere को अर्थ to ring up, to raise, to educate भन्ने हुन्छ । तसर्थ शिक्षाको अर्थ हरेक बालबालिकालाई ज्ञान, सीप सिकाउनु हो । यसरी शिक्षा सम्बन्धमा उल्लेख गरिएका फरक-फरक शब्द भए तापनि शिक्षाको अर्थ भने एउटै लागेको पाइन्छ । हरेक बालबालिकामा जन्मजात अन्तर्निहित शक्ति, प्रतिभा लुकेर रहेको हुन्छ । यस्तो प्रतिभालाई शिक्षा दिने माध्यम (गुरु, घर परिवार, ........) ले अगाडि बढाउनु, तालिम दिनु, बाहिर ल्याउनु आदि भन्ने अर्थ बुझाउँदछ । छोटकरीमा भन्दा हरेक व्यक्तिमा अन्तर्निहित शक्तिलाई विकसित गर्नु शिक्षा हो ।

(ख) शिक्षाको सङ्कुचित अर्थ **(Narrow Meaning of Education)**

शिक्षालाई व्यापक दृष्टिकोणबाट अर्थ नलगाई साँघुरो घेराबाट मात्र हेरी अर्थ लगाउनुलाई शिक्षाको सङ्कुचित अर्थ भनिन्छ । निश्चित पाठ्यक्रम, पाठ्यपुस्तक, समय, शिक्षणविधि, शिक्षक, परीक्षा प्रणाली आदिको सीमित घेराभित्र रहेर विद्यालय वा कुनै शैक्षिक संस्थाअन्तर्गत दिइने शिक्षालाई नै शिक्षाको सङ्कुचित अर्थ मानिन्छ । यसमा शिक्षाको मुख्य स्थान विद्यालयलाई मानिएको हुन्छ । विद्यालयमा गएर बालकले विभिन्न किसिमको ज्ञान प्राप्त गर्ने कार्य गर्दछ । यसबाट बालबालिकालाई केवल किताबी ज्ञान (Bookish knowledge) मात्र प्राप्त गराउन सकिन्छ । शिक्षाको सङ्कुचित अर्थलाई टेवा दिने विभिन्न शिक्षाविद्हरूको भनाइ यसप्रकार उल्लेख गरिएको छ : "शिक्षा केही होइन तर यसले बानीको निर्माण

गर्दछ ।" (Education is nothing but formations of habits. – Rousseau) "स्वस्थ शरीरमा स्वस्थ मस्तिष्कको निर्माण गर्नु नै शिक्षा हो ।" (Education is a creation at a sound mind in a sound body. – Aristotle) "व्यक्तिको बानी र व्यवहारमा विचार र धारणाहरूको स्थायी परिवर्तन ल्याउने उद्देश्यले उसको वातावरणमा प्रभाव पार्नु नै शिक्षा हो ।" (The influence of environment on the individual with a view to producing a permanent change in his habits or behaviour of thoughts and attitude is education. - G.H. Thomson) "शिक्षा भनेको सार्वजनिक रूपमा मान्य विचारहरूलाई बाहिर ल्याउनु हो, जुन प्रत्येक मानिसको मस्तिष्कमा लुकेर बसेको हुन्छ ।" (Education means the bringing out of the ideas of universal validity which are latent in the mind of every man. - Socrates ) यी सबै धारणाहरूका आधारमा निष्कर्ष निकाल्नु पर्दा शिक्षा व्यक्तिलाई शिक्षित बनाउने, बानीहरूको विकास गर्ने वा अन्तर्निहित प्रतिभालाई बाहिर पस्कने माध्यम नै शिक्षा हो ।

### (ग) शिक्षाको व्यापक अर्थ (Wider Meaning of Education)

शिक्षा जीवनभर चलिरहने निरन्तर प्रक्रिया हो । शिक्षा जन्मदेखि सुरु भई मृत्युसम्म चलिरहन्छ । एकपटक लिएको शिक्षा जीवनभरका लागि पुग्दैन । एउटै कुरा पनि समयसापेक्ष फरक-फरक दृष्टिकोणले हेर्नुपर्ने हुन्छ । यसरी शिक्षा प्राप्त गर्न कुनै निश्चित उमेर, सङ्घसंस्था, निश्चित तहको हदबन्धी नराखी जन्मदेखि मृत्युसम्म जुन-जुन स्रोतबाट जे जसरी ज्ञान प्राप्त गरिन्छ त्यो नै शिक्षा हो । यसैलाई शिक्षाको व्यापक अर्थ भनिन्छ । शिक्षाको व्यापक अर्थका सम्बन्धमा शिक्षाविद् जोन डिवे (John Dewey) ले भनेका छन् - "शिक्षा जीवन हो, जीवन भनेको वृद्धि हो, त्यसैले शिक्षा भनेको वृद्धि हो ।" शिक्षाका व्यापक अर्थका सम्बन्धमा केही शिक्षाविद्हरूका विचारहरूलाई हेरौँ । "शिक्षा मानिसको पूर्ण विकास हो ।" (Education is the development of the whole man. – Comenius) "मानिसले विकास गर्न सक्ने सम्पूर्ण क्षमताहरूको विकास गराउनु नै शिक्षा हो ।" (Education is the development in the individual of all the perfection of which he is capable. – Kant)

"व्यापक अर्थमा भन्दा जन्मदेखि नमरेसम्म व्यक्तिलाई प्रभाव पार्ने सम्पूर्ण कुराहरूलाई शिक्षा भनिन्छ ।" (Education in its Widest sence includes all the influences which act upon an individual during his/her passages from cradle to grave. Dumvile) "हामी त्यस्तो शिक्षा चाहन्छौँ जसद्वारा चरित्रको निर्माण हुन्छ, मानसिक बल बढ्छ, बौद्धिकता बढ्छ अनि व्यक्ति आफ्नो खुट्टामा आफैँ उभिन सक्दछ ।" (We want the education by which character is formed, strength of mind is increase intellect is expanded and by which one can stand in one's feet. – Vivekananda) यी माथिका शिक्षाका व्यापक अर्थबाट यो स्पष्ट हुन्छ कि व्यापक अर्थमा शिक्षा मानिसको वृद्धि र विकास गर्ने माध्यम हो र यसले मानिसहरूमा सीप र विभिन्न किसिमको ज्ञान गराएको हुन्छ । व्यापक अर्थमा भन्दा शिक्षाले मुख्य गरेर व्यक्तिमा तीन किसिमको ज्ञानको विकास गराउँछ । ती हुन् :

१. अन्तर्निहित प्रतिभाको विकास
२. व्यक्तित्व र चारित्रिक विकास
३. सङ्गठनात्मक विकास

## १.	अन्तर्निहित प्रतिभाको विकास (Development of Innate Power)

प्रत्येक व्यक्तिमा अन्तर्निहित रूपमा रहेको विचार, क्षमता, प्रतिभा वा शक्ति हुन्छ । यस्तो शक्ति सबै बालबालिकामा एकैनासको हुँदैन त्यसैले व्यक्तिहरू भिन्न- भिन्न प्रकृतिका हुन्छन् । यसप्रकार बालकभित्र सुषुप्त अवस्थामा रहेका यस्ता प्रतिभाहरूलाई शिक्षक, बाबु-आमा, विद्यालयले अध्ययन गर्नुपर्दछ र सोही अध्ययनका आधारमा ती प्रतिभालाई बाहिर निकाल्न सहयोग गर्नुपर्ने हुन्छ । त्यसर्थ शिक्षकले शिक्षण गर्दा बालकको प्रतिभालाई स्वतन्त्र रूपले हुर्कने अवसर दिनुपर्दछ । यो नै आजको आधुनिक शिक्षणको एउटा विशेषता पनि हो । यसै सन्दर्भमा शिक्षाविद् एडिसन भन्दछन् - “जब शिक्षाले स्वस्थ मस्तिष्कमा केही प्रभाव पार्दछ । तब उसका अन्तर्निहित गुणहरूलाई, क्षमताहरूलाई बाहिर ल्याउन सक्दछ ।” यसै सन्दर्भमा फ्रोबेल भन्दछन् - “शिक्षा एक यस्तो प्रक्रिया हो, जसले बालकको अन्तर्निहित शक्तिलाई बाहिर ल्याउँछ ।” यसर्थ अन्तर्निहित शक्तिको प्रस्फुटन गर्ने काम नै शिक्षाको हो ।

## २.	व्यक्तित्व र चारित्रिक विकास (Personality and Character Development)

शिक्षाले व्यक्तित्व एवम् चरित्रको विकास गराउन सहयोग गर्दछ । वास्तवमा भन्ने हो भने व्यक्तित्व भनेको व्यक्तिको व्यवहारको सम्पूर्ण गुण हो । (Personality is the total quality of an individual behaviour.) त्यस्तै चरित्र भन्नाले कुनै पनि देश, समाज, समुदाय वा अन्तरराष्ट्रिय क्षेत्रमा स्वीकार गरिने प्रशंसनीय गुणहरू हुन् । आफ्नो देशका नागरिकहरू चरित्रवान् हुन् भन्ने कुरा प्रत्येक राष्ट्रले अपेक्षा गरेको हुन्छ । त्यसकारण हामी निष्कर्षमा पुग्न सक्दछौँ कि मानिसलाई शिष्टचारी, व्यावहारिक र नैतिकवान् बनाउने अहम् भूमिका शिक्षा हो । यसका लागि विद्यालय व्यवस्थापन, शिक्षकको भूमिका, शैक्षिक क्रियाकलाप उपयुक्त हुनुपर्दछ । अथवा बालबालिकाहरूले आफ्नो घर परिवार, आमा-बाबु, समाज र विद्यालयबाट विभिन्न किसिमका आचरण, स्वभाव, बानी-व्यवहार, बोलीचाली सिकेका हुन्छन् । यस्तै किसिमका क्रियाकलापहरूको समष्टिगत विकासबाट बालबालिकाहरूको सर्वाङ्गीण पक्षको विकास हुने गर्दछ । यसैलाई व्यक्तित्व र चरित्रको विकास भनिन्छ । सामाजिक चाहनाअनुसारको व्यक्तित्व विकास भएमा त्यस्तो व्यक्तिलाई समाजले स्वीकार्दछ । तर अपेक्षित व्यक्तित्व विकास नभएका व्यक्तिहरूलाई समाजले स्वीकार्दैन । समाजमा चलिआएका चालचलन, रीतिरिवाज, परम्परा आदिले व्यक्तित्व विकासमा प्रभाव पारेका हुन्छन् । हरेक परिवारले फरक-फरक व्यक्तित्व भएका बालबालिकाहरू तयार पार्ने भए पनि विद्यालयले ती सबैलाई सामान्यीकरण गरी सबै बालबालिका केही साझा व्यक्तित्व भएका व्यक्ति तयार गर्न कोसिस गर्दछ । हरेक व्यक्तिको व्यक्तित्वले मानिसको जीवनमा मौलिक योगदान पुऱ्याउने भएकाले शिक्षाले व्यक्तिको सम्पूर्ण व्यक्तित्व विकासमा सहयोग पुऱ्याउने गर्दछ ।

### ३. सङ्गठनात्मक विकास (Organizational development)

मानिस सामाजिक प्राणी हो, त्यसैले ऊ समाजदेखि भिन्न रहन सक्दैन । उसले समाजमा नै अन्तरक्रिया गरिरहन्छ । समूहमा रहेर कसरी जीवन बिताउने एउटा व्यक्तिले सामाजिक उत्तरदायित्वको विकास कसरी गर्ने भन्ने कुरा पनि शिक्षाबाट नै सिक्दछ । कुन समाजलाई कसरी अगाडि बढाउने, समाजको सम्पूर्ण पक्षको विकास कसरी गर्ने भन्ने कुरा पनि सामूहिक रूपमा सोच्न सकिन्छ । फरक- फरक दृष्टिकोण बोकेका मानिसलाई एकै ठाउँमा भेला गराइदिने कार्य पनि शिक्षाले नै गर्दछ । हरेक व्यक्तिमा भिन्न-भिन्न व्यक्तिगत क्षमता हुने गर्दछ, त्यसैका आधारमा व्यक्तिलाई भिन्न-भिन्न शिक्षा दिइन्छ । व्यक्ति आफैँले पनि हरेक समय र परिस्थितिमा विभिन्न ज्ञान र अनुभव समेटेको हुन्छ । यो विविधतालाई समाजसापेक्ष रूपमा सङ्गठन गर्न सक्नु नै एउटा व्यक्तिको आवश्यकता हो । शिक्षाले यो कार्य गर्न सक्नुपर्दछ । समाज एक सङ्गठित संस्था हो । यस्तो संस्थाका आ-आफ्नै चालचलन, नियम, परम्पराहरू हुन्छन् । यस्ता विविध पक्षहरूलाई सङ्गठनात्मक रूपमा विकास गर्दै अगाडि बढाउनुपर्दछ । सो कार्य गर्न शिक्षाले महत्वपूर्ण भूमिका खेल्नुपर्दछ ।

## २.२ छोटकरीमा शिक्षाको विकास (Evolution of Education in Brief)

Evolution को शाव्दिक अर्थ विकास भन्ने हुन्छ । शिक्षँको उत्पत्ति भएदेखि आजसम्म शिक्षाको विकास कसरी भएको हो र शिक्षालाई आजको समयसम्म आईपुग्न यसले के कस्ता आप्ठ्याराहरू, व्याधा व्यबधानहरूलाई पन्छाएर अघि बढ्दै आजसम्म आई पुगेको छ भन्ने कुरा नै शिक्षँको विकासले प्रष्ट पार्दछ । शिक्षाको विकास प्राचीन कालदेखि नै हुदै आएको हो । समय समयमा तत्कालिन वातावरण र आवश्यकता अनुसार विभिन्न व्यक्ति, दार्शनिक, समाजशास्त्री तथा शिक्षाविद्बाट यसको अर्थ परिभाषा र चिन्तनहरूको व्याख्या र प्रयोगहरू गरेर शिक्षाका विकासमा योगदान दिएका छन् । शिक्षा आजसम्म आई पुग्दा यसको विकासक्रमलाई यसरी बिभाजन गरी अध्ययन गर्न सकिन्छ ।

(क) प्राचिनकाल (Ancient period)
(ख) मध्यकाल (Medieval Period)
(ग) आधुनिककाल (Modern Period)

### (क) प्राचिनकाल (Ancient period)

पश्चिमी जगतमा आज भन्दा लगभग ६००० बर्ष अगाडि विकसित प्राचीन मिश्रको सभ्यताबाट लेखनकला शुरु भएको पाइन्छ । त्यस बेला धार्मिक, राजकीय संस्थाबाट शिक्षाको व्यबस्था गरिएको थियो । गुरुले चेलालाई दान देऊ, मन देऊ र आमाले जत्तिकै माया गर । सिकाई भन्दा उत्कृष्ठ अरु कुरा छैन भनेर शिक्षाको महत्व बताउने गर्दथे । प्राचीन कालमा सुमेरु पर्वत, टाईग्रिस, युफ्रेटिस् नदिको मुहानमा फैलिएको मेसोपोटामियाको पुरानो सभ्यताले पनि शिक्षा विकासमा टेवा पुऱ्याएको थियो । त्यहां मन्दिर बिद्यालयहरूको स्थापना भएको थियो । वेवीलोनियनको शिक्षा व्यबस्था पनि निकै राम्रो थियो । शुमेरु शव्यता लेखनकलाका लागि प्रसिद्ध मानिन्थ्यो । त्यस्तै गरी एथेन्स र स्पार्टामा पनि विभिन्न सभ्यता

विकास भएको थियो । प्राचीन सभ्यता मध्ये शिक्षाको विकासमा ग्रीस सभ्यताको ठुलो महत्व छ । त्यसै गरी रोमनकालमा त्यहांको शिक्षा व्यबहारिक र पारिवारिक स्वरुपको थियो । आध्यामिक शिक्षाको प्रभाव पनि यथेष्ठ मात्रामा परेको थियो । किनकी ग्रीसबाट केटाकेटीहरू समाती पठाउन लगाइन्थ्यो ।

**(ख) मध्यकाल** (Medieval Period)

युरोपको इतिहासमा दसौ-एघारौ शताव्दीतिर धेरै परिवर्तनहरू आएर शिक्षामा इसाई धर्मको प्रभाव बढ्यो । पछि गएर सर्वव्यापी, प्रेम, भातृत्व एवम् बन्धुत्व अध्ययनकै लागि भए पनि साक्षरता शिक्षामा विकास हुन गयो । बाह्रौ शताव्दीतिर बिश्वबिद्यालयको स्थापना हुन गयो । तेह्रौ शताव्दीमा धर्मलाई दर्शनशास्त्रसंग सम्बन्धित बनाउने, तर्कद्वारा सत्य प्रमाणित गर्ने, व्यबसाय र व्यक्तिगत सम्पत्तिको सम्मान गर्ने प्रज्ञाबादी युग थियो । यसको परिणाम स्वरुप शिक्षामा स्वतन्त्र चिन्तन, मानवताबादी आन्दोलन देखा पऱ्यो । छापाखानाहरूको आविस्कारले शिक्षामा झन विकास गर्न मद्दत पुऱ्यायो ।

**(ग) आधुनिककाल** (Modern Period)

बेलायती गौरवशाली क्रान्ति (सन् १०६८) ले शिक्षामा भएको राजाको हस्तक्षेप र एकलौटी धार्मिक प्रभावकारीताको अन्त्य गऱ्यो । अमेरिकी स्वतन्त्रता संग्रामको परिणाम स्वरुप शिक्षामा एउटा नयां युगको सुरुवात भयो । युरोपमा रोमन क्याथोलिक धर्ममा देखिएको बिकृत्ति सुधार्न भएको धर्म सुधार आन्दोलनले बेलायत, जर्मन, नेदरल्याण्ड, नर्वे, स्वीडेन जस्ता देशहरूमा धेरै शैक्षिक परिवर्तनहरू ल्यायो । बिसौं शताव्दीको अन्त्यसम्म आईपुग्दा शिक्षामा विविध नयां चिन्तनहरू देखा पर्न थाले । बैज्ञानिक, प्रविधिकहरूको शिक्षामा प्रयोग राष्ट्रिय एकीकरण र अन्तर्राष्ट्रिय समझदारीका लागि शिक्षा, सर्वव्यापी शिक्षा, मनोबैज्ञानिक र समाजशास्त्रीय सिद्धान्तहरूको विकास, शिक्षामा प्रजातान्त्रिकहरूको प्रयोग, शिक्षामा बैकल्पिक उपायहरूको खोजी र प्रयोग क्रमश: हुन थाले । वर्तमानमा आएर शिक्षा सर्वव्यापी, निरन्तर, जीवन प्रयन्त र मानवीय अधिकारका रुपमा स्थापित हुन गएको छ । गुरुकुल प्रणालीबाट बिकसीत हुदै आएको शिक्षालाई आज बैज्ञानिक रुपमा बिकसिक गरिएको छ । औपचारिक, अनौपचारिक, अनियमित सवै शिक्षाका माध्ययमहरूलाई आवश्यकता अनुसार प्रयोग गरिएको छ । शिक्षालाई समयानुकुल बिकसित गर्न हाल आएर शिक्षाबिद्हरू अझै पनि क्रियाशिल भईरहेका छन् ।

## २.३ शिक्षाको कार्यहरू (Function of Education)

**सामान्यतया समाजमा शिक्षाले गर्ने कामहरूलाई शिक्षाका कार्य भनिन्छ । समाजमा शिक्षाले गर्ने कार्यहरू यति नै हुन्छन् भनी कसैले पनि किटान गर्न सक्दैनन् किनभने शिक्षाको क्षेत्र निकै व्यापक र विस्तार छ । शिक्षाको कार्य समाजमा यति नै हो भनी किटान गर्नु त यसको क्षेत्रलाई सङ्कुचित गराउन खोज्नु हो । त्यसैले सबै शिक्षाशास्त्रीहरूले विभिन्न प्रक्रियाबाट दिइएका समाजमा शिक्षाको कार्यलाई एकै ठाउँमा राखी विवेचना गर्दा समाजमा शिक्षाका कार्य निम्नलिखित चार किसिमबाट**
**व्याख्या गर्न सकिन्छ :-**




### (क) सांस्कृतिक कार्य (Cultural Function)

साधारण अर्थमा भन्दा कुनै पनि व्यक्ति तथा समाजले परम्परागत रुपमा कायम गर्दै आएको मूल्य, मान्यता, विश्वास, रीतिरिवाज, चालचलन आदिलाई संस्कृति भनिन्छ। छोटो शब्दमा भन्दा व्यक्ति तथा समाजको जीवनपद्धति नै संस्कृति हो। मानिस सामाजिक प्राणी हो। समाज बाहिर रहेर उसले आफ्नो जीवन- निर्वाह गर्न मुस्किल पर्दछ। समाजमा विद्यमान संस्कार, परम्परा, मूल्य- मान्यताअनुसार मानिसले जीवन निर्वाह गरिरहेको हुन्छ। समाजका यस्ता सम्पूर्ण कार्यहरुलाई नै सामाजिक संस्कृति भनिन्छ। यसप्रकार सामाजिक संस्कृतिअनुसार गरिने सम्पूर्ण कार्यहरुलाई सांस्कृतिक कार्य भनिन्छ। प्रत्येक समाज र समुदायमा फरक-फरक संस्कृति हुन्छ। एउटा समाजमा चलेको संस्कृति त्यस समाजको धरोहर हो। संस्कृति निर्माण गर्नेभन्दा पनि त्यसलाई अनुसरण गर्ने गरिन्छ। संस्कृति पुर्खाले आर्ज्याको सम्पत्ति भएकाले यसको संरक्षण, संवर्धन र हस्तान्तरण कार्यमा शिक्षाले महत्वपूर्ण भूमिका खेल्दछ। खासगरी शिक्षाले गर्ने सांस्कृतिक कार्यअन्तर्गत निम्नलिखित कुराहरु पर्दछन् :-

i. देशमा चलेको धर्म-संस्कृतिको विकास, विस्तार, संरक्षण र संवर्धन गरी भावी सन्ततिमा हस्तान्तरण गर्ने,
ii. भाषा, संस्कृति, साहित्य, कला आदिको विकास, विस्तार, संवर्धन र प्रचार-प्रसार गर्ने,

iii. खराब संस्कृति, खर्चिलो अनुत्पादन संस्कार र रुढिवाढितालाई क्रमशः हटाउँदै नयाँ संस्कृतिको स्थापना गर्ने,
iv. नागरिकको भावना जागरण गराउने,
v. धर्म र संस्कृतिका माध्यमबाट बालकलाई सुसंस्कृत एवम् परिष्कृत बनाउने।

**नेपालका सन्दर्भमा शिक्षाको सांस्कृतिक कार्यको सम्बन्ध (Relation of Cultural Function to Nepalese Context)**

नेपाल बहुजातीय, बहुभाषिक, बहुधार्मिक र बहुसांस्कृतिक मुलुक हो । नेपालमा विभिन्न धर्म, चाडपर्व मान्ने मानिसहरूका बीच सहिष्णुता छ । यहाँ भएका विभिन्न जात-जातिका मान्छेहरू पनि मिलेर बसेका छन् । एक जातिका चाडपर्व, धर्म अनि संस्कृतिका मानिसले अर्को जातजातिका धर्म, चाडपर्वलाई सम्मान गरेका छन् । नेपालमा करिब २०० जाति, जनजाति र तिनीहरूले बोल्ने ५५ भन्दा बढी किसिमका भाषाहरू प्रचलनमा पाइन्छन् । यी सबै जातजातिका भाषाभाषिकाहरू, संस्कृतिको विकासले नेपाललाई विश्वसमुदायसमक्ष आफ्नै मौलिकताको परिचय दिएको छ । खासगरी नेपालको मौलिकता भनेकै यहाँका विविध कला तथा सांस्कृतिक सम्पदा हुन् । त्यसकारण यिनको संरक्षण, संवर्धनबिना देशको चौतर्फी विकास हुन सक्दैन । यस मानेमा पनि शिक्षाको सांस्कृतिक कार्य नेपालका सन्दर्भमा ज्यादै उपयुक्त देखिन आउँछ ।

**(ख) आर्थिक कार्य (Economic Function)**

शिक्षाले समाजमा गर्ने अर्को महइत्वपूर्ण कार्य भनेको आर्थिक कार्य हो । आर्थिक कार्य भन्नाले शिक्षा प्राप्त गरेको व्यक्ति आफ्नो आधारभूत आवश्यकता परिपूर्ति गर्न चाहिने आर्थिक जुटाउन सक्षम तुल्याउनुपर्दछ । "No Money No Talk" भन्ने क्यानेडियन उखान र 'Study and Work' भन्ने उखान त्यसै उत्पत्ति भएका होइनन् । त्यसकारण शिक्षाका उद्देश्य आर्थिक विकास एवम् आर्थिक दृष्टिले पनि समुन्नत हुनुपर्दछ । त्यसकारण यसका लागि आधारभूत प्राविधिक शिक्षामा बढी जोड दिनुपर्दछ । शिक्षाले खासगरी White Colour Job र Blue Colour Job गरी दुवै किसिमका जनशक्ति उत्पादन गर्ने गर्दछ ।

खासगरी शिक्षाका आर्थिक कार्यअन्तर्गत निम्न कार्य पर्दछन् :-

i. मानिसका लागि आवश्यक पर्ने गाँस, बास र कपासजस्ता आधारभूत आवश्यकता पूरा गर्ने,
ii. स्वावलम्बी एवम् प्राविधिक शिक्षामा जोड दिने,
iii. जीवनयापनका लागि आवश्यक पर्ने सीप र तालिम दिने,
iv. देशको प्राकृतिक साधन र स्रोतको परिचालन गर्ने,
v. पेसा चयन गर्न सक्ने ज्ञान दिने ।

**नेपालका सन्दर्भमा शिक्षाको आर्थिक कार्यको सम्बन्ध (Relation of Economic Function to Nepalese Context)**

नेपालका परिवेशमा शिक्षाको आर्थिक कार्यको ज्यादै सान्दर्भिक देखिन्छ । साधारण तथा व्यावसायिक शिक्षाको माध्यमबाट व्यक्तिले विभिन्न सीप तथा दक्षता हासिल गर्दछन् र ती दक्षताहरूको सदुपयोगबाट नै देशको आर्थिक विकास हुन सक्दछ । त्यसैले गर्दा नेपालको शिक्षा प्रणालीमा पनि यी कुराहरूमा जोड दिइएको छ त्यसैले गर्दा शिक्षण अस्पताल, चिकित्साशास्त्र अध्ययन संस्थान, कृषि तथा वन विज्ञान अध्ययन संस्थान जस्ता क्षेत्रलाई विशेष जोड दिइएको छ । शिक्षालाई देश विकासको लगानीका रूपमा लिई कार्य गरेको देखिएको छ, जुन अत्यन्त उचित कदमका रूपमा लिन सकिन्छ । कृषिको आधुनिकीकरण र औद्योगिक एवम् व्यावसायिक क्रियाकलापको विस्तारबाट मात्र देशको आर्थिक विकास सम्भव छ त्यसको विकासतर्फ नेपाल पनि लम्केको देखिन्छ ।

(ग) **नागरिक कार्य (Civic Function)**

कुनै पनि देशमा बसी त्यस देशका नियम कानुन मान्ने, देशप्रति समर्पित, देशलाई केही दिन सक्ने देशभक्त, देशप्रेमी व्यक्तिलाई त्यस देशको नागरिक भनिन्छ । कुनै पनि देशका नागरिकहरूले आफूले आफ्नो देशको विकासका लागि, उन्नतिका लागि के-के गर्नुपर्दछ र के-के गर्नु हुँदैन भनी उनीहरूले समाजमा गर्ने कार्यहरूलाई नागरिक कार्य भनिन्छ । शिक्षाले गर्ने नागरिक कार्यअन्तर्गत निम्न कार्य पर्दछन् :-

i. व्यक्तिलाई सुयोग्य, चरित्रवान्, कुशल, स्वावलम्बी नागरिकका रूपमा विकास गराउनु,
ii. कुनै पनि देशको नागरिकमा हुनुपर्ने सबै गुणको विकास गराउने,
iii. प्रजातान्त्रिक मूल्य र मान्यता एकअर्कामा विकास गर्ने बानी बसाल्ने,
iv. देशले निर्धारण गरेका नियम, ऐन, कानुन पालन गर्ने गराउने,
v. देशमा विद्यमान सामाजिक मूल्य र मान्यताअनुरूप संस्कृति र परम्परालाई जगेर्ना गराउनु ।

**नेपालका सन्दर्भमा शिक्षाको नागरिक कार्यको सम्बन्ध (Relation of Civic Function to Nepalese Context)**

आफ्नो देशप्रति समर्पित तथा राष्ट्रका सार्वभौमकताप्रति कटिबद्ध व्यक्ति नै वास्तवमा त्यस देशको नागरिक हो । नेपालको संविधान- २०४७ ले उल्लेख गरेको नागरिक हक, अधिकार, कर्तव्यको बोध गराउँदै सक्षम नागरिक बनाउने शिक्षा नीति र कार्यक्रम अगाडि सारेको छ । बिनाभेदभाव शिक्षामा प्रतिस्पर्धा गर्ने अवसरले पनि नेपालमा नागरिक शिक्षासम्बन्धी उल्लेख्य कार्य भएको मान्नै पर्दछ । प्रत्येक व्यक्तिका अन्तर्निहित क्षमताको विकास गर्ने, कर्तव्यनिष्ठ बनाउने व्यक्तिका आचरणमा सुधार ल्याउने जस्ता कुराहरू नागरिक कार्यका राम्रा उदाहरण हुन् । यी सबै कुराहरूलाई विचार गरी हाम्रो देशको शिक्षाको उद्देश्यलाई केलाएर हेर्ने हो भने शिक्षाको नागरिक कार्य नेपालको परिवेशमा निकै पहिलेदेखि नै लागु हुँदै आएको देखिन्छ ।

### (घ) शिक्षाको विश्वव्यापी कार्य (Global Function of Education)

आज विश्व विज्ञान र प्रविधिको कारणले गर्दा दिनानुदिन साँघुरो भैरहेको छ । जसको कारणले गर्दा एक देशका धर्म, संस्कृति, परम्परा एकअर्काबाट प्रत्यक्ष रूपमा प्रभावित भैरहेका छन् । शिक्षाले संसारका मानिसलाई एकताको सूत्रमा बाँध्ने कार्य गर्नुपर्दछ । त्यसकारण व्यक्ति आज म एउटा मात्र देशको हुँ भनेर नपुग्ने भएको छ । अन्तर्राष्ट्रिय सहयोग, भातृत्व, समभ्रदारी, विश्वबन्धुत्वको भावनाजस्ता पक्षको विकास शिक्षाले गर्नुपर्दछ । यसर्थ विश्वभरका मानिसहरूमा भातृत्व विकास गरी प्रत्येक मानिसको जीवनस्तर उकास्ने कार्य विश्वव्यापी कार्य हो । शिक्षाको विश्वव्यापी कार्यअन्तर्गत निम्नलिखित पक्ष समावेश हुन्छन् :-

i. व्यक्तिमा विश्वशान्ति, एकता, मेलमिलाप, सहयोगको भावनाको विकास गर्नु,
ii. विश्वको परिस्थितिप्रति नागरिकलाई सुसूचित गरी सोअनुसारको भूमिका निर्वाह गर्न मदत गर्ने,
iii. व्यक्तिलाई अन्तर्राष्ट्रिय रूपमा सक्षम नागरिक बनाउने,
iv. अन्तर्राष्ट्रिय खोज, घटनाक्रम र आविष्कारको जानकारी पाउने बनाउने,
v. समाजको विविध पक्षलाई समन्वय र एकीकृत गर्न सघाउने ।

### नेपालका सन्दर्भमा शिक्षाको विश्वव्यापी कार्यको सम्बन्ध (Relation of Global Function to Nepalese Context)

विश्वमा कुनै पनि त्यस्तो देश सायदै छैन होला जो अरू देशको कुनै न कुनै सहयोगबिना बाँचेको होस् । अभ्र नेपालमा त वार्षिक बजेटको भ्रन्डै ६० प्रतिशत जति त विदेशी दातृराष्ट्रहरूमा भर परेको छ । मित्रराष्ट्रहरूको सहयोग र समर्थनबिना नेपालको विकास पनि सम्भव देखिँदैन ।

## २.४. शिक्षाको प्रकृति/स्वरुप (Nature of Education)

जुन बेलादेखि मानव-सभ्यताको विकास हुन थाल्यो त्यसै बेलादेखि शिक्षा लिनेदिने कार्य पनि सुरु भयो । समाजको परिवर्तित रूपअनुसार शिक्षा लिनेदिने कार्यमा पनि विविधता आउनु स्वाभाविकै थियो । यसरी समयानुसार विभिन्न परिस्थितिमा शिक्षालाई कसरी ग्रहण गर्दै आइयो त्यो नै शिक्षाको प्रकृति हो । अभ्र सरल भाषामा भन्दा शिक्षाको प्रकृति भन्नाले बालबालिकाले शिक्षा ग्रहण गर्ने वा प्राप्त गर्ने प्रक्रिया भन्ने बुझिन्छ । सामान्यतया शिक्षाको स्वरूपलाई निम्नलिखित भागमा वर्गीकरण गरी अध्ययन गरिन्छ :

## (क) साधारण र विशिष्ट शिक्षा (General and Specific Education)

### साधारण शिक्षा (General Education)

आज शिक्षा प्रत्येक मानिसको एक नैसर्गिक अधिकारजस्तै भैसकेको छ । शिक्षा प्रत्येक व्यक्तिको एक आधारभूत आवश्यकता हो । त्यसमा पनि साधारण शिक्षा त झन् एक व्यक्तिका लागि अपरिहार्य साधन नै हो । यसप्रकार व्यक्तिको सामान्य जीवन तयार गर्न दिइने शिक्षालाई साधारण शिक्षा भन्दछन् । यस्तो शिक्षाले व्यक्तिलाई सामान्य जीवनका लागि तयार गर्दछ र बौद्धिक प्रतिभाको विकास गर्दछ । कुनै पनि शिक्षाको मूल आधार नै साधारण शिक्षा हो । यसलाई उदार शिक्षा पनि भन्न सकिन्छ । यो शिक्षाको अभावमा मानिस पशुसमान हुन्छ ।

### विशिष्ट शिक्षा (Specific Education)

हरेक व्यक्तिको चाहना, रुचि, क्षमता, योग्यता, आवश्यकता एउटै हुँदैन, फरक-फरक किसिमको हुन्छ । यसर्थ भिन्न-भिन्न प्रतिभा भएका व्यक्तिहरूलाई उनीहरूको प्रतिभाअनुसार कुनै विशेष लक्ष्यलाई ध्यानमा राखेर दिइने शिक्षालाई विशिष्ट शिक्षा भनिन्छ । यस्ता शिक्षा व्यक्तिको विशेष, प्रतिभा, रुचि र क्षमताको आधारमा साधारण शिक्षा प्राप्त गरिसकेपछि मात्र दिइन्छ । अर्को शब्दमा भन्दा व्यक्तिको जीविकोपार्जनका सीप र राष्ट्रको विशेष क्षेत्रमा योगदान पुऱ्याउन सक्ने खालको शिक्षालाई विशिष्ट शिक्षाअन्तर्गत समावेश गर्न सकिन्छ । भौतिक सुख, सुविधा प्राप्त गर्न यस्तो शिक्षा आवश्यक पर्दछ । जस्तै- वकिल, डाक्टर, इन्जिनियर, पाइलट आदिले प्राप्त गरेका शिक्षा विशिष्ट शिक्षाका उदाहरण हुन् ।

## (ख) प्रत्यक्ष र अप्रत्यक्ष शिक्षा (Direct and Indirect Education)

### प्रत्यक्ष शिक्षा (Direct Education)

प्रत्येक सिकारुले प्रत्यक्ष रूपमा सुनेर, अनुभव गरेर, देखेर, अरूको आदर्श, उपदेशको प्रभाव परी व्यवहारमा परिवर्तन गराउने शिक्षालाई प्रत्यक्ष शिक्षा भनिन्छ । यस्तो शिक्षामा विद्यार्थीले शिक्षकबाट ज्ञानका कुराहरू सिक्नुका साथै शिक्षकको व्यक्तित्वको समेत अनुकरण गर्ने गर्दछन् । यस शिक्षाका निश्चित योजना, पाठ्यक्रम र निश्चित शिक्षणविधिको समेत पालना गरिन्छ । यसरी एउटा शिक्षकले कक्षाकोठामा दिने शिक्षा प्रत्यक्ष शिक्षाको उदाहरण हो । यसमा शिक्षक र विद्यार्थीबीच प्रत्यक्ष रूपमा आफ्ना ज्ञान, आदर्श र मूल्यहरू आदान-प्रदान हुन्छन् ।

### अप्रत्यक्ष शिक्षा (Indirect Education)

सिकारुहरूको इच्छा, रुचि र आवश्यकताअनुसार स्वतन्त्र रूपबाट सिकिने शिक्षालाई अप्रत्यक्ष शिक्षा भनिन्छ । यस किसिमको शिक्षाको पूर्वनियोजित योजना हुँदैन, त्यसैले यो शिक्षा व्यक्तिले कुनै पनि स्थान,

समय र अवस्थामा प्राप्त गर्न सक्दछन् । यसमा सिकारुलाई शिक्षकको उपदेशको प्रभाव पर्दैन, तर सिकारुले भने सिकिनै रहेका हुन्छन् ।

### (ग) व्यक्तिगत र सामूहिक शिक्षा (Individual and Collective Education)

#### व्यक्तिगत शिक्षा (Individual Education)

हरेक व्यक्तिहरू विभिन्न स्वभावका हुन्छन् । यस्तै फरक-फरक स्वभावका कारण उनीहरूका इच्छा र रुचिहरू पनि फरक-फरक हुनु स्वाभाविकै हो । यसरी फरक-फरक स्वभावका आधारमा व्यक्ति-व्यक्तिअनुसार फरक-फरक रूपमा दिइने शिक्षा नै व्यक्तिगत वा वैयक्तिक शिक्षा हो । आजको आधुनिक युगमा वैयक्तिक शिक्षालाई विशेष महत्व दिइएको पाइन्छ । व्यक्तिगत शिक्षाको सहायताले व्यक्तिमा अन्तर्निहित क्षमता र प्रतिभा प्रस्फुटन गर्न ठूलो सहयोग गर्दछ । यस शिक्षाले व्यक्तिका आवश्यकतासमेत पूरा गर्न सहयोग पुऱ्याउँदछ ।

#### सामूहिक शिक्षा (Collective Education)

व्यक्तिको व्यक्तिगत भिन्नतालाई वास्ता नगरी सामूहिक भावना, चाहना, आवश्यकता वा सामूहिक स्वार्थलाई विशेष महत्व दिइने शिक्षालाई सामूहिक शिक्षा भनिन्छ । यसरी धेरै बालबालिकाहरूलाई एकै किसिमको शिक्षा दिनु नै सामूहिक शिक्षा हो । देशको राष्ट्रिय लक्ष्य र उद्देश्य पूरा गर्नका लागि औपचारिक सङ्घ संस्थाहरूले परम्परागत रूपमा दिइँदै आएको शिक्षा सामूहिक शिक्षाको उदाहरण हो । यसमा व्यक्तिको स्वार्थलाई भन्दा समूहको स्वार्थलाई बढी प्राथमिकता दिइन्छ ।

## २.५. शिक्षाको प्रकारहरू (Types/Forms of Education)

### (क) औपचारिक शिक्षा (Formal Education)

निश्चित पाठ्यक्रम, नियम, विविध कार्यक्रमहरू अपनाई पूर्वनिर्धारित उद्देश्य प्राप्तिका लागि नियमपूर्वक दिइने शिक्षालाई औपचारिक शिक्षा भनिन्छ । यसलाई नियमित शिक्षा पनि भनिन्छ । यस्तो शिक्षा प्रणालीमा शिक्षण-सिकाइको समाप्तिपछि परीक्षा प्रणालीमा समावेश भई पास, फेल घोषित गरिन्छ । विद्यालय, क्याम्पसमा हाल सञ्चालित शिक्षा नै औपचारिक शिक्षा हो । यस्तो शिक्षा व्यक्तिको चाहनामा भर पर्दैन र निश्चित अनुशासनको पालना गर्नुपर्ने हुन्छ । वास्तवमा भन्ने हो भने कुनै पनि देशको शिक्षा प्रणाली भन्नाले सामान्यतया औपचारिक शिक्षालाई नै जनाउँदछ । यस किसिमको शिक्षाले समाजका सबै

व्यक्तिको शैक्षिक आवश्यकता पूरा गर्न सक्दैन । शिक्षा प्राप्त गर्ने क्रममा प्रजातान्त्रिक मूल्य, मान्यता र व्यक्तिको स्वतन्त्रताको कदर हुँदैन । यसरी शिक्षाका आलोचकहरूले यस शिक्षालाई बाँधिएको शिक्षा पद्धति, खर्चिलो शिक्षा पद्धति, सिर्जनात्मकतामा बाधक, सम्भ्रान्त शैक्षिक पद्धति, कठोर वा स्थिर शैक्षिक पद्धति भन्ने गर्दछन् ।

### **(ख) अनौपचारिक शिक्षा (Non-formal Education)**

औपचारिक शिक्षा प्रणालीभन्दा बाहिर वा अलग रूपमा निर्धारित उद्देश्य प्राप्तिका लागि क्रमबद्ध रूपमा निर्माण गरिएको पाठ्यक्रमका आधारमा प्रदान गरिने शिक्षालाई नै अनौपचारिक शिक्षा भनिन्छ । यो औपचारिक शिक्षाभन्दा विपरीत हुन्छ । जस्तै : प्रौढ शिक्षा, कृषि विस्तार तालिम, स्काउट तालिम, अपाङ्ग कार्यक्रमहरू, जनसङ्ख्या शिक्षा कार्यक्रम, रेडियो, टि.भी., कार्यशाला, गोष्ठी आदि यस शिक्षाका उदाहरणहरू हुन् । अनौपचारिक शिक्षा व्यक्तिको इच्छा र चाहनाअनुरूप, व्यावहारिक, सीपमूलक र कार्यमूलक हुन्छ । यो शिक्षा व्यवस्था औपचारिक शिक्षाको तुलनामा लचिलो, कम खर्चिलो, जीवन-निर्वाह गर्न मार्गनिर्देशन गर्ने, व्यक्तिको तत्कालीन आवश्यकता पूरा गर्ने कार्यमा यो शिक्षा उपयोगी देखिन्छ । “पढेरभन्दा परेर सिकिन्छ” भन्ने सिद्धान्तमा यो शिक्षा पूर्ण रूपमा आधारित छ ।

### **(ग) अनियमित शिक्षा (Informal Education)**

कुनै पनि व्यक्तिले खेल्दा, डुल्दा, छरछिमेकसँग कुरा गर्दा, मनोरञ्जन गर्दा विभिन्न कुराहरू सिकिनै रहेको हुन्छ । यसर्थ पूर्व निर्धारित योजना, समय, पाठ्यक्रम, शिक्षणविधि, स्थान, उमेर आदिको बन्देजबिना कुनै पनि परिवेशमा अकस्मात् सिकिने शिक्षालाई अनियमित शिक्षा भनिन्छ । यसलाई आकस्मिक शिक्षा पनि भनिन्छ । यो शिक्षा परिवेश र परिस्थितिमुखी हुन्छ । यो शिक्षाका आधारमा हरेक व्यक्तिले बानी, धारणा, मूल्य, सीप र ज्ञानहरू आर्जन गर्दछन् । व्यक्तिको अन्तर्निहित मनस्थितिबाट पैदा हुने, अरूको अनुकरण गरेर सिक्ने, अनुभव गरेर सिकेका कुराहरू यसअन्तर्गत पर्दछन् ।

## **२.६ शिक्षाका उद्देश्यहरू** (Aims of Education)

### **(क) शिक्षाको व्यक्तिगत उद्देश्य (Indivisual Aim of Education)**

वास्तवमा भन्ने हो भने शिक्षाको यो उद्देश्य व्यक्तिको व्यक्तित्व विकासमा सहायता पुऱ्याउनुसँग आधारित छ । प्रत्येक व्यक्तिमा अद्वितीय आन्तरिक गुण र शक्तिहरू अन्तर्निहित हुन्छन् । त्यस्ता आन्तरिक शक्तिको विकासमा शिक्षाले सहायता पुऱ्याउनु शिक्षाको मुख्य उद्देश्य हुनुपर्दछ । यसप्रकार हरेक बालबालिकाको व्यक्तिगत विकासमा सहयोग पुऱ्याउने उद्देश्यलाई शिक्षाको व्यक्तिगत उद्देश्य भनिन्छ ।

शिक्षा प्राप्त गर्नु भनेको बालकले जुनसुकै परिस्थितिमा समाजमा समायोजन हुन सक्नु हो । समाजको बदलिँदो परिवेशअनुसार मानिसका इच्छा र आवश्यकता पनि परिवर्तन हुन्छन् । त्यसैले घरपरिवार, विद्यालयले व्यक्तिलाई शिक्षा दिँदा परिवर्तित परिस्थितिअनुरूप व्यक्तिलाई उसमा भएका अन्तर्निहित प्रतिभा बाहिर ल्याउने गरी उसको व्यक्तिगत विकास गर्न जोड दिनुपर्दछ । व्यक्तिले आफ्नो जीवन- निर्वाह गर्न विभिन्न अवस्थामा सिकिएका ज्ञान, सीप र अनुभवले उसको व्यक्तित्व विकासमा सहयोग पुग्नुपर्दछ । यसलाई शिक्षाको व्यक्तिगत उद्देश्यभित्र राख्न सकिन्छ । समग्रमा भन्दा शिक्षाका व्यक्तिगत उद्देश्यहरूलाई बुँदागत रूपमा निम्नानुसार उल्लेख गर्न सकिन्छ ।

- हरेक व्यक्तिको जीवनको अवसर र सम्भावनाहरूलाई फराकिलो बनाउनु,
- सादा जीवन र उच्च विचारको तयारी गर्नु,
- व्यक्तिमा रहने अद्वितीय गुण र शक्तिको प्रस्फुटन गराउनु,
- पारिवारिक चालचलन र रीतिरिवाज सिकाउनु,
- प्रत्येक व्यक्ति समाजमा मिलेर बस्ने बानीको विकास गर्नु,
- मानवीय गुण सिकाइ समाजमा प्रतिष्ठित हुन सहयोग गर्नु,
- परम्परागत अनुभव सिकाइ असल चरित्र निर्माण गर्नु,
- मानवीय व्यक्तित्व निर्माण गरी परिस्थितिसँग निरन्तर सङ्घर्ष गर्न सक्ने जनशक्ति निर्माण गर्नु,

### (ख) शिक्षाको सामाजिक उद्देश्य (Social Aim of Education)

सामाजिक आवश्यकता, सामाजिक मूल्य र मान्यताअनुरूप सञ्चालित शिक्षाका उद्देश्यलाई सामाजिक उद्देश्य भनिन्छ । हरेक व्यक्ति कुनै न कुनै समाजको सदस्य हुन्छ । तर जो शिक्षित हुन्छ, त्यो समाजको सक्रिय सदस्य हुन्छ । जबसम्म हामीले समाजप्रति केही योगदान दिन सक्दैनौँ तबसम्म हामीलाई समाजले सक्रिय सदस्यका रूपमा स्वीकार्दैन । तसर्थ शिक्षाको सामाजिक उद्देश्यले हरेक व्यक्तिलाई समाजको योग्य सदस्य बनाउन प्रयत्न गरिरहेको हुन्छ । अर्को शब्दमा भन्ने हो भने देशका सबै नागरिकहरूलाई व्यक्तिगत स्वार्थमा समर्पित नभई राष्ट्रिय स्वार्थप्रति समर्पित गराउन तयार पारिने शिक्षाका उद्देश्यहरू नै शिक्षाको सामाजिक उद्देश्य हो । शिक्षाको सामाजिक उद्देश्यले प्रत्येक व्यक्तिलाई समाजको योग्य सदस्य बनाउने प्रयास गरेको हुन्छ । व्यक्तिलाई आफ्नो नागरिकताको पहिचान गराउने, स्वस्थ नागरिक जीवन-निर्वाह गराउने र राष्ट्रप्रति जिम्मेवार बनाउने उद्देश्य नै शिक्षाको सामाजिक उद्देश्य हो । अर्थात् छोटकरीमा भन्दा शिक्षाको सामाजिक उद्देश्य भन्नाले व्यक्तिलाई समाजसापेक्ष बनाउनु हो । खासगरी शिक्षाका सामाजिक उद्देश्यलाई निम्नलिखितअनुसार सूचीबद्ध गरी अध्ययन गर्न सकिन्छ । अर्थात् शिक्षाका सामाजिक उद्देश्यभित्र निम्नलिखित कुराहरू पर्दछन् -

i. मानवीय सम्बन्धको उद्देश्य (Objective of Human Relation)
ii. आर्थिक सम्बन्धको उद्देश्य (Objective of Economic Efficiency)

iii. नागरिक ज्ञानको उद्देश्य (Objective of Civic Knowledge)

**मानवीय सम्बन्धको उद्देश्य (Objective of Human Relation)**

मानिस जन्मिदा एक्लै स्वतन्त्र रूपमा भए पनि उसलाई आफ्नो जीवन- निर्वाह गर्न वा गाँस, बास, कपास र सुरक्षाको प्राप्त गर्न एकआपसमा सहयोग, सद्भावनाको आवश्यकता पर्दछ । प्रत्येक व्यक्तिका चाहना र आवश्यकता पूरा गर्न एकआपसमा सम्बन्ध अत्यन्त घनिष्ठ हुनुपर्दछ । मानवीय सम्बन्धका आधारमा व्यक्तिले आफ्नो जीवन सरल, सुखी र समृद्धि बनाउँदछ । यसले व्यक्तिलाई 'म' भन्ने भावना हटाई हामी भन्ने भावनाको विकास गराउन सहयोग गर्दछ । हरेक समाजमा केही आवश्यक नीति, नियम, परम्परा, धर्म, संस्कृति तथा मूल्य-मान्यताहरू रहेका हुन्छन् । यस्ता सामाजिक मूल्य-मान्यता, संस्कृति र सभ्यता मानवीय सम्बन्धका आधारमा नै विकसित भएका हुन्छन् । यस्तो सम्बन्ध स्थापित गर्ने काम शिक्षाका उद्देश्यभित्र पर्नुपर्दछ ।

**आर्थिक सम्बन्धको उद्देश्य (Objective of Economic Efficiency)**

“भोको पेट नहोइ भजन” भने झै केवल सैद्धान्तिक ज्ञानले मात्र मानिस पूर्ण हुन सक्दैन । यसर्थ मानिसले पूर्ण जीवन-निर्वाह गर्न आर्थिक दक्षता प्राप्त गर्नु अति आवश्यक हुन्छ । शिक्षा प्राप्त गरिसकेपछि आर्थिक रूपमा दक्षबन्न सक्नुलाई आर्थिक दक्षतासँग सम्बन्धित उद्देश्य मानिएको छ । यसका लागि हामीले सुनिआएका कुराहरू जस्तै : "No Money No Talk" भन्ने क्यानेडियन उखान र "Study and Work" अध्ययन र काम गर भन्ने उखानहरूबाट पनि यो प्रस्ट हुन्छ कि शिक्षाको उद्देश्य आर्थिक समुन्नति गर्नप्रति केन्द्रित हुनुपर्दछ । व्यक्तिले शिक्षा प्राप्त गरेपछि आफ्नो जीवनयापन ठीकसँग गर्न सक्नुपर्दछ । शिक्षाले व्यक्तिलाई आफ्नो खुट्टामा उभिई आफ्नो आवश्यकता आफैं पूरा गर्न सक्ने सक्षम बालक तयार गर्ने उद्देश्य राखेको हुन्छ । व्यक्तिलाई सामाजिक बनाउन, आधारभूत आवश्यकता पूर्ति गर्न र आर्थिक समुन्नति गर्नका लागि पनि सीपमूलक र व्यवसायमूलक व्यावहारिक आर्थिक दक्षता आवश्यक पर्दछ । सीपमूलक शिक्षा र व्यावसायिक तालिमले मात्र मानवीय जीवनयापन गर्न सकिन्छ । यसप्रकार शिक्षाको सामाजिक उद्देश्य आर्थिक दक्षताको विकास गराउनप्रति अग्रसर हुनुपर्दछ ।

**नागरिक ज्ञानको उद्देश्य (Objective of Civic Knowledge)**

समाजमा मानिसले एक नागरिकका हैसियतले विभिन्न कर्तव्यहरू पूरा गर्नुपर्ने हुन्छ । कुनै पनि देशको नागरिक भैसकेपछि त्यस व्यक्तिले आफूले के-के गर्नुपर्दछ ? के-के गर्नु हुँदैन ? आफ्नो अधिकार के हो ? मेरो समाजप्रतिको दायित्व के हो ? राष्ट्रप्रतिको जिम्मेवारी के हो ? थाहा पाउनुपर्दछ । यस्ता विविध पक्षको जानकारी दिने उद्देश्यलाई नै नागरिक ज्ञानको उद्देश्य भनिन्छ ।

कहिलेकाही हामीले नागरिकको भावना र नागरिकताको बोध (Civic sense and civic awarness) का बारेमा छलफल गर्दछौं, जसको अभावमा मानव- व्यवहारमा परिवर्तन ल्याउन सकिँदैन । समाजमा बसेर गर्नुपर्ने, आचारणको सामान्य ज्ञान पनि भएन भने त्यो व्यक्ति पशुसमान हुन्छ । यसर्थ शिक्षा दिनु भनेको यस्तै व्यवहार, आचरणहरू व्यक्तिमा विकास गराउनु हो । यसरी सामाजिक दायित्वबोध गर्ने,

आत्मपहिचान गर्ने जस्ता क्षमताको विकास शिक्षाको माध्यमले गर्नुपर्दछ । यस्ता किसिमका शिक्षाको उद्देश्यलाई नै नागरिक ज्ञानसम्बन्धी उद्देश्य भन्दछन् ।

## ३. नमूना प्रश्नहरू

यस एकाइको अन्तमा सिकाइहरूले के कति बिषयवस्तुको ज्ञान हासिल गरे निम्न लिखित प्रश्नहरूको आधारमा जाच गर्न सकिन्छ । अर्थात सिधा भाषमा भन्नु पर्दा माथि दिइऐ बिषयवस्तुको आधरमा यस एकाइबाट परीक्षामा सोध्न सकिने प्रश्नहरूको नुमनाहरू यस प्रकार हुन सक्दछन् ।

१. शिक्षा भनेको के हो ? शिक्षाको विभिन्न अर्थहरूको सुची बताउनुहोस् ।
२. शिक्षाको व्यापक अर्थको उदाहरण सहित व्यख्या गर्नुहोस् ।
३. शिक्षा जीवन हो उदाहरण सहित व्याख्या गर्नुहोस् ।
४. शिक्षा लिनु भनेको व्यक्तिगत अन्तर्निहित प्रतिभाको विकास गर्नु पनि हो । यस भनाइलाई उदाहरणसहित व्याख्या गर्नुहोस् ।
५. औपचारिक शिक्षाको परिभाषा दिई यसका बिशेषताहरू उल्लेख गर्नुहोस् ।
६. अनौपचारिक शिक्षाको परिचय दिई यसका बिशेषताहरू उल्लेख गर्नुहोस् ।
७. साधारण र बिशिष्ट शिक्षामा भएको फरक उल्लेख गर्नुहोस् ।
८. प्रत्यक्ष र अप्रत्यक्ष शिक्षामा के के फरक छ ? व्याख्या गर्नुहोस् ।
९. शिक्षित र अशिक्षित व्यक्तिहरूवीच कस्तो भिन्नता पाइन्छ ? व्याख्या गर्नुहोस् ।
१०. शिक्षा जीवनको आवश्यकता हो सुहाउदो उदाहरणसहित व्याख्या गर्नुहोस् ।
११. शिक्षा किन उद्देश्यमुलक हुनुपर्दछ ? शिक्षाको उद्देश्य तथा लक्ष्य निर्धारण गर्नु किन महत्वपुर्ण मानिन्छ ?
१२. शिक्षाको व्यक्तिगत उद्देश्य भनेको के हो ? व्याख्या गर्नुहोस् ।
१३. शिक्षाको सामाजिक उद्देश्य भनेको के हो ? चर्चा गनुहोस् ।

## ४. उत्तर संकेत तथा विशेष सल्लाह

यी माथि प्रश्नहरूको उत्तर माथि दिइएको विषयबस्तुको अध्ययनपछि दिन सकिन्छ । प्रश्नको उत्तर दिदा प्रश्नहरूको उत्तरलाई विभिन्न खण्डमा टुक्राइएको हुन्छ । त्यसैको आधारमा मार्क दिइन्छ । प्रश्नको सिधै उत्तर नदिई सबभन्दा पहिले त्यसको पृष्ठभूमी वा परिचय दिनुपर्दछ अनि प्रश्नको मूख्य भागको उत्तर दिनुपर्दछ र अन्त्यमा निचोडजस्तो दिई उत्तर टुङ्ग्यानुपर्दछ । जस्तै शिक्षाका कार्यहरू लेखी ब्याख्या गर्नुहोस् भन्ने प्रश्न सोधेमा सवैभन्दा पहिले शिक्षाका कार्यहरू भनेको के भन्ने लेख्नुपर्दछ ।अनि त्यसका कार्यहरू लेखी व्याख्या गर्नुपर्दछ । यसको मार्कको वाडफाड यस प्रकार हुन सक्दछ :

२+४+४=१०

अर्थात पचियलाई २ मार्क, प्रकारको सुचीलाइ ४ र व्याख्यालाई ४ गरी जम्मा १० मार्क हुन जान्छ ।

यस एकाइलाई विस्तृत रूपमा पढ्नका लागि सर्न्दभ सामाग्रीको रूपमा निम्नलिखित पुस्तक अध्ययन गर्न सकिने छ।

अर्थात यस एकाईको लागि सर्न्दभ सामग्रीहरु :


१. आचार्य बेदराज र धामी केशव सिंह (२०६४): शिक्षाको परिचय, वागबजार,काठमाडौं, रत्नपुस्तक भण्डार।

२. वाग्ले मनप्रसाद र ढकाल माधव प्रसाद (२०५५) शिक्षाको प्रारम्भिक परिचय, भोटाहिटी, काठमाडौं : विद्यार्थी पुस्तक भण्डार।

३. भट्टराई होमनाथ (२०६५) शिक्षाको परिचय,काठमाडौं:,इन्क्लुसिभ प्रकाशक तथा वितरक प्रा.ली.।

## एकाइ : दुई
# साक्षरता शिक्षा
## (Literacy Education)

## १. एकाई परिचय

यस एकाइमा साक्षरता शिक्षाको अर्थ, आधारभूत पद्धतिहरू तथा प्रविधिहरूका वारेमा उल्लेख गरिएको छ । पाठ्यक्रमले यस एकाइलाई १५ पाठ्यभार तोकेको छ । यस एकाइका मूख्य विषयवस्तुहरूको सार तथा वार्षिक परीक्षाको तयारीका अभ्यासका लागि प्रश्नहरू तथा तिनीहरूको उत्तरको वारेमा सहजीकरण गर्ने प्रयास समेत गरिएको छ । यस एकाइका विषयवस्तुहरूलाई निम्नानुसारका शिर्षक तथा उपशिर्षकमा पाठ्क्रममा दिइएकै ढाँचामा उल्लेख गरिएको छ ।

२.१ साक्षरताको अर्थ (Meaning of Literacy Education)

२.२ आधारभूत साक्षरता उपागम वा पद्धतिहरू (Basic Literacy Approach)

- १. ध्वनि विधि अथवा अक्षर शिक्षण पद्धति (Phonic or Phonetic Approach)
- २. मूल शब्द पद्धति (Key-Word Approach)
- ३. भाषा अनुभव पद्धति (Language Experience Approach -LEA)
- ४. पूर्ण भाषा पद्धति ( Whole Language Approach - WLA )

२.३. आधारभूत साक्षरताका तरिका वा प्रविधिहरू (Basic Literacy Techniques)

- १. समुदाय सशक्तिकरण प्रविधि विकासको माध्यमबाट साक्षरता पुनरुत्पादन प्रविधि (Regenerating Freirerian Literacy Through Empowering Community Technique - REFLECT)
- २. सिकारुद्वारा निर्मित सामग्रीहरू (Learner Generated Meterials - LGM)
- ३. स्थानीय प्रवुद्ध व्यक्तिद्वारा निर्मित सामग्री (Local Elite Generated Materials - LEGM)

## २. एकाइको मूलभूत सार

### २.१ साक्षरताको अर्थ (Meaning of Literacy Education)

परम्परागत धारणाअनुसार सामान्य रुपमा अक्षरहरू र लिपीहरू चिनेर सामान्य लेखपढ गर्न तथा दैनिक जीवनका सामान्य गणितीय हिसावहरू गर्न जान्नुलाई साक्षरता भन्ने गरिन्छ । तर आधुनीक धारणाअनुसार पढाइ, लेखाइ, सामान्य गणितीय ज्ञान, सीपका साथै आफ्ना अधिकार, उत्तरदायित्व, सामाजिक तथा अन्य अन्तरसम्वन्ध र मनोरञ्जन गर्न सक्ने क्षमता विकास गर्नुलाई साक्षरता शिक्षा भनिन्छ ।

साक्षरता शिक्षा आधारभूत साक्षरता र कार्यमूलक साक्षरता गरी २ किसिमको वा तह हुन्छन् ।

१. **आधारभूत साक्षरता** (Basic Literacy)

सामान्य अक्षर चिन्न, पढ्न, पढ्न लेख्ने र दैनिक गणितिय हिसाव किताव गर्नसक्ने क्षमता विकास गर्ने सीपलाई आधारभूत साक्षरता भनिन्छ ।

२. **कार्यमूलक साक्षरता** (Functional Literacy)

कुनै कार्यलाई उद्देश्यमूलक रुपबाट पढाइ लेखाइको प्रयोग दैनिक जीवनमा गराउने क्षमता विकासलाई कार्यमूलक साक्षरता भनिन्छ ।

**साक्षरताको परिभाषा**

साक्षरताको अर्थ र परिभाषा समयसँगै बदलिने तथा विकसित हुँदै गएको पाइन्छ । तल दुईओटा परिभाषाहरूलाई प्रस्तुत गरिएको छ ।

१. यूनेस्को (UNESCO) ले हाल 7Rs का आधारमा साक्षरतालाई परिभाषित गरेको छ । जसअनुसार पढाइ (Reading), लेखाइ (Writing), अङ्कगणित (Arithmatic) अधिकार (Right), उत्तरदायित्व (Responsibility), सम्वन्ध (Relationship) र मनोरञ्जन (Recreation) पर्दछन् ।

२ अनौपचारिक शिक्षा पाठ्यक्रमकाअनुसार आधारभूत समस्या समाधान गर्न आवश्यक ज्ञान, सीप र प्रवृतिको विकास गरी चिठ्ठीपत्र निवेदन पढ्न, बुझ्न लेख्न सक्ने र व्यवहारिक हर-हिसाव गर्न सक्षम तुल्याई जीवनस्तर उठाउन सहयोग गर्ने शिक्षलाई आधारभूत शिक्षा भनिन्छ ।

वृहतरुपमा साक्षरताका निम्नलिखित रुपहरू हुन सक्दछन् ।

१. प्राज्ञिक/शैक्षिक साक्षरता
२. राजनैतिक साक्षरता
३. व्यापारिक साक्षरता
४. पेशागत /व्यवहारिक साक्षरता
५. वैज्ञानिक साक्षरता
६. कम्प्युटर साक्षरता आदि ।

## २. २. आधारभूत साक्षरता उपागम वा पद्धतिहरू

(Basic Literacy Approaches)

साक्षरताका विभिन्न विधिहरू पद्धतिहरू हुन्छन् । यहाँ पाठ्क्रमले उल्लेख गरेअनुसारका पद्दतीहरूलाई तल बुँदागत रूपमा उल्लेख गरिएको छ ।

### १. ध्वनि विधि अथवा अक्षर शिक्षण पद्धति

(Phonic or Phonetic Approach)

**ध्वनि वा अक्षर शिक्षण विधिको परिचय**

अक्षरको स्वर वा आवाजबाट साक्षरता प्रदान गर्ने पद्धतिलाई ध्वनि वा अक्षर शिक्षण विधि भनिन्छ । यस विधिबाट साक्षरता प्रदान गर्दा सर्वनाम अक्षरहरू क,ख,ग,घ......... ज्ञ तथा स्वरहरू अ,आ, इ ............ आदि सिकाइ क, का, कि........... आदि सिकाइन्छ । सिकारुले ती अक्षरहरूलाई अर्थपूर्ण रूपमा प्रयोग गरी शब्द र वाक्य बनाउन जान्दछ । यसरी विभिन्न शब्दहरूलाई ध्वनि तथा अक्षरका माध्यमबाट अर्थरुपमा प्रयोग गरी ज्ञान, सीप र क्षमता आदान प्रदान गरी साक्षरता प्राप्त गर्दछ ।

**उदाहरण**

| अक्षरहरू | जोडिएको शब्द | वाक्य |
|---|---|---|
| पा, नी | पानी | पानी पिउनु पर्छ । |
| भा, त | भात | भात खान्छौं |

**ध्वनि वा अक्षर शिक्षण विधिका चरणहरू**

यस आवाज वा ध्वनि पद्धतिका चरणहरूलाई तल उदाहरण सहित उल्लेख गरिएको छ ।

| क्र.सं. | चरणहरू | चरणगत विधि | उदाहरण |
|---|---|---|---|
| १. | प्रथम चरण | ध्वनि (Phoneme) | क,ख,ग, घ, ………………ज्ञ |
| २. | दोस्रो चरण | शब्दांश (Matrix of Syllabus) | भ+आ = भा |
| ३. | तेस्रो चरण | शब्द (Word) | भा+त = भात |

**ध्वनि पद्धतिका सबल पक्षहरू**

ध्वनि पद्धतिका सबल पक्षहरू निम्नानुसार छन् ।

१. यसबाट अक्षर चिनाउदा सिकारुको भाषामा पूर्ण विकास हुन मौका पाउँछौ ।

२. यो एक विश्वासिलो र परम्परागत देखि प्रयोग हुँदै आएको पद्धति हो ।

३. यस पद्धतिले सिकारुलाई संकेतको सम्बन्धबाट सिकाइ सिक्न सहयोग गर्दछ ।

४. साक्षर घरपरिवारले यस पद्धतिबाट घरमै साक्षर बनाउन सकिन्छ ।

५. कम शैक्षिक सामग्री भए पुग्ने ।

६. वालक तथा प्रौढ दुवैलाई साक्षर बनाउन प्रयोग गरिन्छ ।

७. यस विधिबाट साक्षर हुने आफ्नो दैनिक जीवनको काम काज चलाउन तथा सूचना, विज्ञापन, पत्रिका पढ्ने आदि आफ्नो जीवन पद्धतिलाई सहज बनाउन सक्दछ ।

## २. मूल शब्द पद्धति (Key-Word Approach)

**मूल शब्द पद्धतिको परिचय**

सिकारुको जीवनमा दैनिक रूपमा प्रयोग हुने मुख्य शब्दहरू सिकारुलाई नै भन्न लगाई तिनै मूल शब्दहरूलाई प्रयोग गरी अक्षरहरूमा टुक्राउँदै साक्षरता प्रदान गर्ने पद्धतिलाई मूल शब्द पद्धति भनिन्छ । यस पद्धतिबाट अनुभव प्राप्त उमेर भैसकेका यूवा तथा प्रौढहरूलाई साक्षर बनाउन बढी सजिलो हुन्छ । यो विधि निरक्षरता उन्मूलनका लागि नेपाल लगायत विश्वका प्रायः मुलुकहरूले अपनाएको एक अनुसन्धानात्मक तथा नव प्रवर्धनात्मक पद्धति पनि हो । यसमा युवा तथा प्रौढ सिकारुले जाने बुझेका, देखे भोगेका कुराहरूलाई उनीहरू कै शब्द प्रयोग गरी प्रयोगात्मक रुपमा उतार्न लगाइन्छ । उनीहरूले प्रयोग गर्ने शव्दलाई नै मूल शव्द (Key- word) भनिन्छ । पाठको शुरुवात गर्दा सिकारुका दैनिक जीवनका विभिन्न

वास्तविक समस्या तथा मुद्दाहरूबाट शुरु गरिन्छ । मूख्य गरेर घाम, पानी, हावा, घर, जाडो, गर्मी, खोला, काम, पेशा आदि विषयवस्तुबाट पाठको शुरुवात गरिन्छ । त्यस पछि ती शब्दलाई अक्षरमा टुक्राइन्छ । प्रत्यक अक्षरको परिचय गराइन्छ । अनि ती अक्षरलाई पुनः जोडी शब्द सिकाइन्छ । क्रमशः वाक्यमा प्रयोग गर्न लगाई व्यक्तिहरूलाई साक्षर वनाइन्छ ।

## मूल शब्द पद्धतिका प्रक्रियागत चरणहरू

( Steps of Whole Leaning Approach )

यस मूल शब्द पद्धतिका मुख्य चरणहरूलाई तल बुँदागत रूपमा उल्लेख गरिएको छ ।

चरण १ : सिकारुको जीवनशैलीअनुसारका चित्रात्मक, घटनामूलक र कथात्मक प्रस्तुति ।
चरण २ : छलफल चलाउने र मूल शब्द भन्न लगाउने ।
चरण ३ : मूल शब्दको छनोट गर्न लगाउने र मूल शब्द सबैलाई चिनाउने ।
चरण ४ : मूल शब्दलाई टुक्राउन लगाई शब्द निर्माण प्रक्रिया प्रष्ट्याउने ।
चरण ५ : नयाँ शब्द बनाई वाक्यहरू बनाउने, चिनाउने र अभ्यास गराउने ।
चरण ६ : वाक्यहरूको प्रयोगबाट विभिन्न अनुच्छेद, कथा, कविता रचना गर्न लगाउने ।
चरण ७ : वास्तविक समस्याको समाधान गर्न लगाउने ।

## मूल शब्द विधिका सबल पक्षहरू (Strengths of Key-Word Approach)

यस शब्द विधिका सबलपक्षहरू निम्नानुसार छन् ।

१. यो एउटा अनुसन्धानात्मक तथा आधुनिक साक्षरता प्रदान गर्ने पद्धति हो ।
२. आवाज र संकेतको संयोजनले गर्दा सिकाइ प्रभावकारी हुन्छ ।
३. औपचारिक र अनौपचारिक दुवै पद्धतिमा लागू गर्न सकिने ।
४. साक्षरता सिकाइ वास्तविक समस्यासँग सम्बन्धित भएकाले अर्थपूर्ण र प्रभावकारी हुन्छ ।
५. सहभागीहरू सक्रिय र परिपक्व हुने भएकाले शिक्षण सजिलो हुन्छ ।
६. सिकाइ क्रियाकलाप र पूरै प्रक्रियामा सहभागीहरूको पूर्ण सक्रियता हुन्छ ।
७. सहभागीहरूको आकर्षण र उत्प्रेरणा बढी हुन्छ ।
८. सिकाइ दिगो र स्थायी हुन्छ ।

## ३. **भाषा अनुभव पद्धति** (Language Experience Approach -LEA)

### **भाषा अनुभव पद्धतिको परिचय**

सिकाइको क्रममा सिकारुको आफ्नो मातृभाषा तथा भाषिकाको ज्ञान, सीप, अनुभव, व्यवहार, परम्परा संस्कृति, संस्कार आदिलाई उपयोग गरेर साक्षरता प्रदान गर्ने पद्धतिलाई भाषा अनुभव विधि भनिन्छ । यसलाई छोटकरीमा LEA पनि भनिन्छ । निरक्षर व्यक्तिलाई साक्षर बनाउनका लागि यस विधिमा मुख्यत तिन ओटा कुराहरूमा विशेष जोड दिइन्छ ।

१. भाषा (Language)
२. अनुभव (Experience)
३. पद्धति (Approach)

यो पद्धतिमा सिकारुका अनुभव, भोगेका समस्याहरू, प्रचलित र अनुभव भैसकेको कथा, कविता, उखान टुक्का, गीत आदिलाई आफ्नै मातृभाषामा भन्न लगाइन्छ । नेपालमा सर्वप्रथम १९६३ मा यस पद्धतिलाई परीक्षणको रुपमा सिरहा जिल्लाको मैथिली भाषाभाषीमा प्रयोग गरिएको थियो । यसको प्रयोग एउटै मातृभाषा बोल्ने समुदायमा बढी फलदायी र सफल हुने देखिएको छ ।

### **भाषा अनुभव पद्धतिका चरणहरू** (Steps of Language Experience Approach )

यस भाषा अनुभव पद्धतिका प्रमुखचरणहरू निम्नानुसार छन् :

| | | |
|---|---|---|
| चरण १ | : | सहभागीहरूले जानेका कथा, कविता, गीत, उखान, चित्र घटना आदि |
| चरण २ | : | सहभागीहरूवीच सामग्री, अनुभव र क्रियाकलापका रूपमा छलफल गराउने सोध्दै उत्तरहरू र शब्दहरू टिपोट गर्ने । |
| चरण ३ | : | सहभागीहरूबीचमा शब्दहरू र तिनको संगठन र पुननिर्माण सम्बन्धमा मौखिक र लिखित अभ्यास गराउने । |
| चरण ४ | : | शब्दहरूलाई छुट्याउन, पुनः जोड्न र पुनः निर्माण गराउन अभ्यास गराउने । |
| चरण ५ | : | सहभागीहरूलाई विभिन्न समूहहरूमा विभाजन गरी जोडिएको वाक्यलाई पढ्न लगाउने र पुनः निर्माण गर्न लगाउने । |
| चरण ६ | : | मिल्दो जुल्दो कथा, गीत, घटना, कविता, लेख्ने अभ्यास गराउने । |

### भाषा अनुभव पद्धतिका सबल पक्षहरू
### (Strengths of Language Experience Approach)

भाषा अनुभव विधिका प्रमुख सबल पक्षहरू निम्नानुसार छन् ।

१. सिकाइ उत्साहजनक हुन्छ । सिकारुको आफ्नै मातृभाषामा हुन्छ ।
२. शिक्षण सिकाइ स्थानीय सामग्री र मातृभाषामा आधारित हुन्छ ।
३. विषयवस्तुहरू सिकारुको अनुभव नै हुने हुनाले सिकारु सिकाइप्रति बढी आकर्षित हुन्छन् ।
४. सिकारुको सिकाइमा सक्रियता बढी र निरन्तर हुन्छ ।
५. सिकाइ प्रभावकारी र दीर्घकालीन हुन्छ ।

## ४. पूर्ण भाषा पद्धति ( Whole Language Approach - WLA )

### पूर्ण भाषा पद्धतिको परिचय

साक्षरता प्रदान गर्ने क्रममा भाषाका प्रायः जसो सम्पूर्ण पक्षहरू सुनाइ, बोलाइ, पढाइ, लेखाइ, सोचाइ, स्मरण, व्याकरण आदिलाई समेटेर साक्षर बनाउने पद्धतिलाई पूर्ण भाषा पद्धति भनिन्छ । यसलाई छोटकरीमा WLA भनिन्छ । यस पद्धतिमा भाषाको सबै सामग्रीहरू सिकारुको आवश्यकता र चरणका आधारमा पूर्ण सामग्री प्रयोग गरी साक्षरता प्रदान गरिन्छ । यस पद्धतिमा सिकाइका सूचनाहरू अर्थपूर्ण र सामग्रीहरू सहभागीमैत्री रूपमा छनोट र प्रयोग गरिनु पर्दछ ।

### पूर्ण भाषा पद्धतिका चरणहरू ( Steps of Whole Leaning Approach )

पूर्ण भाषा पद्धतिका प्रमुख चरणहरू निम्नानुसार छन् :

| | |
|---|---|
| चरण १. | साक्षर हुन चाहने व्यक्तिहरूको विषयमा जानकारी प्राप्त गर्नु । |
| चरण २. | विषयवस्तुको पहिचान । |
| चरण ३. | शिक्षण योजनाको तयारी |
| चरण ४. | सहभागीहरूको प्रगति मूल्याङ्कन |

## पूर्ण भाषा पद्धतिका सबल पक्षहरू
(Strength of Whole Language Approach)

यस पूर्णभाषा पद्धतिका सबल पक्षहरू निम्नानुसार छन् :

१. स्थानीय समस्या र मुद्धामा आधारित तथा सिकाइ रुचिकर हुने ।
२. भाषाका सबै पक्षहरू सुनाइ, बोलाइ, पढाइ, लेखाइ आदि समावेश भई पूर्णता प्राप्त गर्दछ ।
३. साक्षरतालाई समुदायको विकाससँग एकिकृत गर्न सकिन्छ । शिक्षण सिकाइ सिकारु केन्द्रित हुन्छ ।
४. शिक्षण सिकाइ सिकारु केन्द्रित हुन्छ ।
५. स्थानीय सामग्रीको उपयोगले सिकाइ रुचिकर र जीवन्त हुन्छ ।
६. सिकाइको मूल्याङ्कन गर्न सबै पद्धति अपनाउन सकिन्छ ।
७. शिक्षण सिकाइका क्रममा सिकारुले सामग्री आफै बनाई सिकाइमा संलग्न हुन पाउछ ।
८. यो पद्धति साक्षरताको व्यापक दृष्टिकोण हो ।

## २.२ आधारभूत साक्षरताका तरिका वा प्रविधिहरू
(Basic Literacy Techniques)

आधारभूत साक्षरताका विभिन्न तरिकाहरू हुन्छन् । ती मध्ये मुख्य रूपमा साक्षरता पुनरुत्पादन (REFLECT), सिकारुद्वारा निर्मित सामग्री (LGM) तथा स्थानीय प्रवुद्ध निर्मित सामग्री (LEGM) प्रविधि वा तरिकाहरू प्रमुख छन् । यिनीहरूका बारेमा छोटो चर्चा तल गरिएको छ ।

### १. समुदाय सशक्तिकरण प्रविधि विकासको माध्यमबाट साक्षरता पुनरुत्पादन प्रविधि
(Regenerating Freirerian Literacy Through Empowering Community Technique -REFLECT)

### परिचय

यो प्रविधि पाउलो फ्रेरेद्वारा प्रतिपादीत गरिएको हो । उनको "Pedagogy of the Oppressed" कृतिको अर्थ शोषित, पीडित तथा दविएका वर्गलाई शिक्षित बनाउने शिक्षण प्रविधि भन्ने हुन्छ । यस पुनरुत्पादन प्रविधिअनुसार शिक्षकले छनौट गरेको ज्ञान, सीप र शब्दहरू

वर्णमालामा आधारित परम्परागत साक्षरता गराई साक्षरता प्रदान गर्ने विधि हो । यस सिकाइ प्रविधिमा सचेतीकरण, विद्यार्थी प्रतिक्रियाको अवसर, सिर्जनात्मक क्षमताको विकास, समालोचनात्मक जागृति र संवादबाट शिक्षाको प्रावधान राखिएको हुन्छ । यसरी आफ्नो समुदायको हित चाहने र चेतना फैलाउने सिकारुले आफ्नै विषयवस्तुको छनौट गरी सबै तहमा जनचेतना जगाउने, सहभागीहरूलाई साक्षर बन्न प्रेरित गर्ने, सहभागीहरू आफैंले पढ्ने पाठको छनौट गर्न सक्ने आदि कार्यबाट सम्पूर्ण विकास गराउने तरिकालाई रिफ्लेक्ट (REFLECT) भनिन्छ । रिफ्लेक्ट विधिबाट पाउलो फ्रेरेले साक्षरता प्रदान गर्दा कुनै पूर्ण आधारित पाठ्यक्रम विनानै समुदायलाई साक्षर बनाउन सकिन्छ ।

## रिफ्लेक्टका प्रक्रियागत चरणहरू (Steps of REFLECT)

पाउलो फ्रेरेका साक्षर बनाउने यस रिफ्लेक्ट प्रविधिका चरणहरू निम्नानुसार छन् ।

| | |
|---|---|
| चरण १. | साक्षरता शिक्षा लिन आउने व्यक्तिका रुचि, आकाङ्क्षा र आवश्यकताका सर्वेक्षण गर्ने । |
| चरण २. | सर्वेक्षण सामग्रीको विश्लेषण |
| चरण ३. | समस्या प्रस्तुत गर्ने माध्यमको तयारी |
| चरण ४. | सिकारुको समूहलाई चिन्तन र कार्यप्रक्रिया सञ्चालन गर्ने । |

यसरी साक्षरता कक्षामा कुनै कुरा छलफलमा ल्याएपछि त्यसलाई सबैले विश्लेषण गरी गलत कुराहरू हटाउन चिन्तन गर्ने र पुनः कार्य गर्ने योजना बनाउनु पर्दछ । धेरै पटकको चिन्तन र कार्यचक्रपछि नतिजा वा समाधानमा पुग्न सकिन्छ । फ्रेरेको संवाद प्रकृयालाई निम्नानुसार देखाउन सकिन्छ ।



**रिफ्लेक्ट प्रविधिका सबल पक्षहरू** (Strengths of REFLECT)

रिफ्लेक्ट प्रविधिका सबल पक्षहरू निम्नानुसार छन् :

१. पूर्व निर्धारित पाठयक्रम विनानै व्यक्तिलाई साक्षर बनाउन सकिन्छ ।
२. पढाइका विषयवस्तुहरू सहभागीका समस्या रुचि र आवश्यकतामा आधारित हुन्छन् ।
३. सिकारुमा समस्याहरूको सर्वेक्षण गर्ने, सामग्रीको विश्लेषण गर्ने, चिन्तन तथा कार्य गर्ने सीपको विकास हुन्छ ।
४. समुदायलाई सशक्तिकरण गराउन सहयोग गर्दछ ।
५. सिकारु वा शिक्षकलाई स्थानीय वातावरण र समस्या प्रति गम्भिर भई अनुकूलका क्रियाकलाप छनौट गर्न गम्भिर बनाउँदछ ।
६. सिकारुको अन्तरनिहित प्रतिभाको विकास हुने मौका प्राप्त हुन्छ ।
यसरी सिफ्लेक्ट प्रविधिको आविष्कार पछि साक्षरता शिक्षाले गुणात्मक फड्को मारेको पाइन्छ ।

## २. **सिकारुद्वारा निर्मित सामग्रीहरू** (Learner Generated Meterials - LGM)

### परिचय

सिकाइ सामग्रीहरू सहभागीहरू आफैं संलग्न भई आफूहरूले नै आफ्नै भाषा र लेखाइबाट अध्ययन गर्न पाउने अवसर प्रदान गर्न साक्षरताको प्रविधिलाई LGM प्रविधि भनिन्छ । यस प्रविधिबाट सिकारुको लेखाइ र पढाइ सीप समेतको विकास हुन्छ । यसका साथै आफ्नै विचारलाई लेखेर सामूहिकरुपमा अध्ययन गर्न पाउँदा उनीहरूमा आत्म जागरण तथा हौसला पैदा हुन जान्छ । मुख्य गरेर यस LGM प्रविधिका मुख्य उद्देश्यहरूमा सिकाइ सामग्री निर्माण गरी सिकारुको सीप बढाउनु, नव साक्षरहरूलाई सिक्ने कार्यमा प्रोत्साहन दिनु, सिकाइप्रति सिकारुहरूको आत्मविश्वास र जागरण पैदा गराउनु, सहभागीहरूमा लेखाइ सीपको विकास गराउनु, सहभागीहरूलाई आफ्ना विचार आदान प्रदान गर्न उचित अवसर प्रदान गर्नु रहेका छन् ।

## ३. **सिकारु उत्पादित सामग्रीका चरणहरू** (Steps of LGM)

यस LGM प्रविधिका चरणहरूलाई तल प्रस्तुत गरिएको छ ।

| | |
|---|---|
| चरण १: | **लेखाइको लागि तयारी**: यस चरणमा कक्षामा कुनै सामग्रीको चित्र, कथा आदि प्रस्तुत गरी सहभागीहरूका अनुभव र जानकारीहरूलाई संकलन गरी भन्ने र लेख्ने कार्यका लागि तयारी गरिन्छ । |
| चरण २: | **मसौदा निर्माण गर्ने** : पहिलो चरणमा चयन भएका शब्दहरूलाई छलफलका आधारमा लेख्न लगाइन्छ । शुरुमा सीमित शब्द र पछिपछि स्वतन्त्ररुपमा लामा लामा शब्दहरू पनि लेख्न लगाइन्छ । |
| चरण ३: | **विचारहरूको साझेदारी र विकास** : यस चरणमा सिकारुले लेखाइहरूलाई छलफलका आधारमा युगल पढाइ, समूह प्रस्तुती साझा लेखन समूह लेखाइ भेला आदि कार्य गरिन्छ । |
| चरण ४: | **सम्पादन** : यस चरणमा सहभागीले लेखेका कुराहरूलाई प्रकाशन योग्य बनाउनका लागि भाषा विषयवस्तु सम्पादन गरी फोटोकपी, स्टेनसील पेपर र आदिका आधारमा धेरै प्रति निकालिन्छ । यसले सहभागीमा लेखाइप्रति आत्मविश्वास वढनको साथै लेख्न प्रोत्साहन पनि मिल्दछ । |

## सिकारुद्वारा उत्पादित सामग्रीका सबल पक्षहरू

(Strengths of Learner Generated Meterials - LGM)

यस प्रविधिका प्रमुख सबल पक्षहरू निम्नानुसार छन् :

१. सहभागीहरूद्वारा नै सामग्री निर्माण गर्न सकिन्छ ।

२. सहभागीहरूमा पढाइका साथै लेखाइ र सामग्री निर्माण सीपको विकास हुन्छ ।

३. दैनिक जीवनसँग सम्बन्धित र स्थानीय सामग्रीको निर्माण गर्न सकिन्छ ।

४. सहभागीहरूका विचार, ज्ञान, सीप र क्षमताको आदान प्रदान गर्ने मौका मिल्दछ ।

५. नवसाक्षरहरूलाई उत्प्रेरणा मिल्ने हुनाले सिकाइ छिटो र दिगो हुन्छ ।

६. LGM बाट उत्पादित सामग्रीहरूलाई अन्य पद्धति पूर्ण भाषा, अनुभव र रिफ्लेक्टमा पनि प्रयोग गर्न सकिन्छ ।

७. सिकारुको वास्तविक जीवन र जीवनका घटनाहरूमा आधारित भई साक्षरता प्रदान गर्दछ ।

## ३. स्थानीय प्रवुद्ध व्यक्तिद्वारा निर्मित सामग्री
(Local Elite Generated Materials - LEGM)

### परिचय

स्थानीय रुपमा रहेका अनुभवी ज्ञान, सीप र क्षमता भएका गन्य मान्य, बुढापाका र समाजमा विशेषज्ञ तथा वुद्धिजीवीका रूपमा कहलिएका व्यक्तिहरूबाट साक्षरताका लागि तयार पारिएका सामग्रीलाई स्थानीय प्रवुद्ध व्यक्तिद्वारा निर्मित सामग्री (LEGM) भनिन्छ । यो प्रविधि स्थानीय वुद्धिजीवीहरूले स्थानीय तहका व्यक्तिहरूको रुचि, चाहना र आवश्यकता बुझ्दछन. र सो अनुसार सामग्री तयार गर्न सक्दछन् भन्ने मान्यतामा आधारित छ । यसबाट स्थानीय समुदायका भाषाभाषी, रितिरिवाज, परम्परा, धर्म संस्कृति चाडपर्व, जातजातिका तथ्यहरू झल्काउने सामग्रीहरू स्थानीय वुद्धिजीवीहरूद्वारा तयार गरिन्छ ।

### LEGM **का प्रक्रियागत चरणहरू** (Steps of LEGM)

LEGM का प्रमुख ७ ओटा प्रक्रियागत चरणहरू छन् । तिनीहरूलाई तल प्रस्तुत गरिएको छ :

| | |
|---|---|
| **चरण १:** | **कार्यशालाको तयारी :** यस चरणमा स्थानीय तहका विभिन्न क्षेत्रका वुद्धिजीवीहरूलाई भेला गराई विशेषज्ञ सङ्ख्या, कार्यशालाको दिन समय र स्थान, स्रोत व्यक्ति, विषयवस्तु, आदि सम्पूर्ण पक्षको तयारी गरिन्छ । |
| **चरण २:** | **कार्यशाला सञ्चालन :** यस अन्तरगत कार्यशाला उद्घाटन, उद्देश्य प्रकाशन सहभागी परिचय, आवश्यकता पहिचान, अनुभव आदान प्रदान, सामग्रीको पहिचान गरिन्छ । समूहगत रूपमा विषयवस्तुको खेस्रा (Draft) तयार गरिन्छ । सबैबाट खेस्रालाई आवश्यक परिमार्जन गरी आवश्यक सामग्री तयारी गरिन्छ । |
| **चरण ३:** | **सम्पादन :** यस चरणमा खेस्राको सामान्य सम्पादन गर्न उदाहरण र भाषाका शब्दलाई जोड दिई अवस्वाभाविक त्रुटीहरू हटाई विषयवस्तुको सम्पादन गरिन्छ । |

| | |
|---|---|
| **चरण ४:** | **प्रकाशन,** सम्पादित सामग्रीलाई स्थानीय तहमा उपलब्ध साधन, परिवेश र आवश्यकताअनुसार प्रकाशन गर्दै गइन्छ । |
| **चरण ५:** | **सामग्री परीक्षण** : यस चरणमा प्रकाशति सामग्रीहरूलाई साक्षरता कक्षामा आएका सहभागीहरूबीच परीक्षण गरिन्छ । यस क्रममा सहभागीहरूबाट उनीहरूको रुचि, चाहना र स्तरअनुसार सामग्रीहरू छ छैनन भनी पृष्ठपोषण प्राप्त गरिन्छ । |
| **चरण ६:** | **सुधार सहित प्रकाशन :** यस चरणमा सामाजिक परीक्षणबाट प्राप्त सुझावका आधारमा सम्पादन समेत गरी प्रकाशन गरिन्छ । |
| **चरण ७:** | **वितरण तथा प्रयोग :** यस चरणमा सुधार सहित प्रकाशन गरिएको सामग्रीलाई व्यापक र सघन रूपमा वितरण र प्रयोग गरिन्छ । |

### LEGM **का सबल पक्षहरू** (Strengths of LEGM)

LEGM का सबल पक्षहरूलाई तल प्रस्तुत गरिएको छ :

१. स्थानीय सीप र विशेषज्ञताको उपयोग र दक्षताको विकास दुवै हुने ।
२. साक्षरताका सामग्रीहरूको स्थानीय तहमा नै निर्माण हुने ।
३. सामग्रीका कमजोरी र त्रुटीलाई तुरुन्त सच्याउन सकिन्छ ।
४. स्थानीय स्रोत र साधनको प्रयोग भई कम खर्चिलो हुन्छ ।
५. सामग्री विकास गर्ने, कार्यशाला तयारी र सञ्चालन गर्ने, सम्पादन र प्रकाशन गर्ने सीपको विकास हुन्छ ।
६. स्थानीय भाषा कला संस्कृति आदिको संरक्षण र विकास हुन्छ ।
७. स्थानीय परिवेश अनुसार सामग्री तयार हुनाले सिकाइ रुचीपूर्ण, प्रभावकारी र उपलव्धीमूलक हुन्छ ।

## ३. केही नमूना प्रश्नहरू

यस एकाइको अन्तमा के कति बिषयवस्तुको ज्ञान हासिल भयो भनी तल उल्लेखित प्रश्नहरूको आधारमा मूल्याङ्कन गर्न सकिन्छ । यस एकाइबाट परीक्षामा सोध्न सकिने केही महत्वपूर्ण प्रश्नहरूको नुमनाहरू यस प्रकार छन् ।

१. साक्षरता शिक्षा भनेको के हा ? उदाहरण सहित वर्णन लेख्नुहोस् ।
२. मुख्य शब्द विधिको परिचय दिदै यसका चरण र सवल पक्षहरू लेख्नुहोस् ।

३. भाषा अनुभव विधिको परिचय दिँदै यस विधिका सवल पक्षहरू के-के छन् ?
४. ध्वनि अक्षर विधि भनेको के हो ? यस विधिका चरण र फाइदाहरू लेख्नुहोस् ।
५. पूर्ण भाषा पद्धति भनेको के हो ? यस विधि सञ्चालन गर्दा अपनाइने आधारभूत चरणहरू लेख्नुहोस् ।
६. LGM भनेको के हो ? साक्षरता कक्षामा यसको महत्व र यो विधि अपनाउँदा अपनाइने चरणहरूको व्याख्या गर्नुहोस् ।
७. रिफ्लेक्ट (REFLECT) भनेको के हो ? यस विधि सञ्चालन गर्ने प्रक्रियागत चरणहरू उल्लेख गर्नुहोस् ।
८. पूर्ण भाषा विधिको फाइदाहरू के-के छन् लेख्नुहोस् ।
LGM र LGM के के कुरामा फरक र समानता छ ? बुँदागत रुपमा उदाहरण सहित व्याख्या गर्नुहोस् ।

## ४. उत्तर संकेत तथा विशेष सल्लाह

- यी माथिका प्रश्नहरूको उत्तर प्रश्नहरूको क्रमअनुसार यस एकाइको विषयवस्तुको अध्ययनबाट दिन सकिन्छ । सकभर उत्तर दिंदा आफ्नो भाषा, उदाहरण र विषयवस्तुको गहिराइमा गै दिनु पर्दछ । प्रश्नको उत्तर कति लेख्ने भन्ने कुरा लामो प्रश्न हो वा छोटो प्रश्न के हो त्यसलाई ध्यान दिई उत्तर लेख्नुपर्दछ ।
- यदि प्रश्नमा परिचय नसोधी चरण र सवल पक्षहरू मात्र दिएको छ भने पनि सम्बन्धित विधि वा पद्धतिको छोटो परिचय दिनु उपर्युक्त हुन्छ । किनकि उत्तर कुञ्जीकामा परिचयलाई पनि अङ्क छुट्याइएको पाइन्छ ।
- कुनै पनि उपागम वा पद्धति तथा विधि प्राविधिक बारेमा फाइदा, महत्व सोधेको छ भने पनि सवल पक्षहरूका बुँदाहरूलाई नै महत्व वा फाइदाका भाषामा लेखि उत्तर दिनु उपर्युक्त हुन्छ ।

**एकाइ : तिन**

# **पाठ्यक्रम** (CURRICULUM)

## १. एकाई परिचय

यस एकाइमा खासगरी पाठ्क्रम भनेको के हो? यसको अर्थ, पाठ्यक्रमको महत्व साथै पाठ्यक्रमका तत्वहरूका बारेमा चर्चा गरिनेछ । यस एकाइको पाठ्यभार ५ घण्टा तोकिएको छ । यस एकाइमा निम्नलिखित विषयवस्तु तोकिएको छ ।

क) पाठ्यक्रमको अर्थ
ख) पाठ्यक्रमको महत्व
ग) पाठ्यक्रमका तत्वहरू
घ) पाठ्यक्रम र पाठ्यांशबीच फरक

## २. एकाइको सारसंक्षेप

अव यहा यी विषयवस्तरको बारेमा छोटकरीमा वर्णन गरिएको छ ।

### २.१ पाठ्यक्रमको अर्थ




पाठ्यक्रमलाई अंग्रेजीमा Curriculum भनिन्छ। Curriculum शब्द ल्याटिन भाषाको Curricurer बाट आएको हो। यसको ल्याटिन भाषामा अर्थ हुन्छ (तय गर्नु -दौड्नु) हुन्छ। यसर्थ

पाठ्यक्रमको शाब्दिक अर्थ त्यो धावन मार्ग हो जसअनुसार अघि बढ्दा विद्यार्थीहरुले अपेक्षित लक्ष्य तथा उद्देश्य प्राप्त गर्न सफल हुन्छ। यसरी नै पाठ्यक्रमलाई साघुरो अर्थमा पाठ्यक्रमलाई पढ्ने विषयवस्तुको क्रमवद्ध सुचि मानिन्छ भने व्यापक अर्थमा पाठ्यक्रमलाई औपचारिक शिक्षाको लागि विद्यालय बाहिर वा भित्र निर्दिष्ट लक्ष्यको लागि गरिने क्रियाकलापलाई बुझ्नुपर्दछ।

## २.२ पाठ्यक्रमको महत्व

वालवालिकालाई योजनाबद्ध एवं संगठित ज्ञान दिन तथा सिकाइलाई लक्ष्य प्राप्तीको विन्दुसम्म पुऱ्याउन पाठ्यक्रमको ठूलो भुमिका रहेको हुन्छ । पाठ्यक्रमविना शिक्षण-सिकाइ र अन्य शैक्षिक गतिविधिहरू सुचारु रूपले अगाडि बढ्न सक्दैन । शिक्षाका लक्ष्य एवम् उद्देश्य पाठ्यक्रमविना कल्पना पनि गर्न सकिँदैन । त्यसर्थ सम्पूर्ण शैक्षिक कार्यक्रमको मेरुदण्ड नै पाठ्यक्रम हो । त्यसकारण पाठ्यक्रम शैक्षिक क्षेत्रको गुरुयोजना हो । पाठ्यक्रमको महत्वलाई बुँदागत रूपमा निम्नअनुसार प्रस्ट पार्न सकिन्छ :

१. सिकारुको रुचि चाहना एवं आवश्यकता वमोजिम आवश्यक ज्ञान सिकारुसमक्ष पुऱ्याउछ ।
२. बालक, समाज र राष्ट्रको सर्वाङ्गीण विकासमा सघाउँछ ।
३. शिक्षण-सिकाइलाई प्रभावकारी बनाउँछ ।
४. विद्यार्थीको मुल्याङ्कन गर्न सहयोग गर्दछ ।
५. शिक्षकलाई पथ प्रदर्शन गर्छ ।
६. सर्म्पूण शैक्षिक वातावरणललाई व्यवस्थित वनाउछ ।
७. सिकारुलाई पृष्ठपोषण तयार गरी सिकाइ प्रक्रियालाई क्रियाशिल बनाउन सहयोग गर्दछ ।

## २.३ पाठ्यक्रमका तत्वहरू

**पाठ्यक्रम निर्माण गर्ने क्रममा समावेश गरिने विभिन्न अंगहरूलाई नै असल पाठ्यक्रमका तत्वहरू मानिन्छ । पाठ्यक्रम विभिन्न तत्वहरूको सामुहिक रुप हो । पाठ्यक्रमका तत्वहरूकाबीच शिक्षाविद्हरु वीच समान धारणा पाइदैन तथापि उनीहरूले दिएको धारणालाइ केलाउदा पाठ्क्रमका मुख्य तत्वहरुलाई निम्नाअनुसार उल्लेख गर्न सकिन्छ :**

(अ) **उद्देश्यहरू** (Objectives)
(आ) **विषयवस्तु** (Content)
**(इ) शिक्षण-सिकाइ रणनीति / विधिहरू** (Teaching learning strategies /methods)
(ई) मूल्याङ्कन (Evaluation)




अव यी तत्वहरुका बारेमा छोटकरीमा तल वर्णन गरिएको छ।

**(क) उद्देश्यहरू (Objectives)**

पाठ्यक्रमको सबैभन्दा महत्वपूर्ण र प्रथम तत्व उद्देश्य हो । उद्देश्यले बालबालिकाहरूबाट के अपेक्षा गर्ने, कस्तो व्यवहारको आशा गर्ने, कस्तो नागरिक बनाउने, के सिकाउने भन्ने जस्ता कुराहरूको निर्धारण गर्दछ । उद्देश्यले पछि निस्कने परिणाम वा उपलब्धिलाई परिलक्षित गर्छ । पाठ्यक्रममा उद्देश्यहरू बालबालिकाहरूको रुचि, क्षमता, आवश्यकता, राष्ट्रको नीति, समाजको आवश्यकता र मागका आधारमा तयार गरिन्छन् । पाठ्यक्रम सम्पूर्ण शैक्षिक योजना, कार्यक्रम र कार्यपद्धतिको मार्ग चित्र (Road map) हो । त्यसैले यसका उद्देश्यहरू जति स्पष्ट, प्रासाङ्गिक, सान्दर्भिक, पर्याप्त, कार्यमूलक, विकासात्मक, व्यापक, वैज्ञानिक, व्यावहारिक र विशिष्ट हुन्छन् त्यति नै उपयुक्त र असल पाठ्यक्रम हुन जान्छ । उद्देश्यले नै विषयवस्तु, शिक्षणविधि, सामग्री, मूल्याङ्कन आदि तत्वहरूलाई निर्देशित गर्दछ । त्यसकारण उद्देश्यलाई पाठ्यक्रमको एक महत्वपूर्ण तत्व मानिएको हो ।

### (ख) विषयवस्तु (Content)

पाठ्यक्रमको दोस्रो महत्वपूर्ण तत्व विषयवस्तु वा विषयसुची हो । विषयसुची उद्देश्यप्राप्तीको लागी तयार पारिएको अध्ययन सामाग्री भएकोले यसको छनौट आफैमा एक चुनौतीपूर्ण कार्य हो। खास गरी विषययस्तु वा सूचीहरू निम्निखित गुण भएको हुनुपर्दछ ।

१. विषयसुचीले उद्देश्य पुरा गर्न सहयोग गर्दछ ।
२. विद्यार्थीको स्तर, क्षमता एवं सामाजिक आवश्यकताबमोजिमको हुनुपर्दछ ।
३. पाठ्यक्रममा छानिने विषयसुची सामाजिक यथार्थ अनुकुल हुनुपर्दछ ।
४. विषयवस्तुमा छानिएको भाषा स्पस्ट,सरल एवं सरर हुनुपर्दछ ।
५. विषयवस्तुमा समसामयिक दृष्टान्तहरूको प्रयोग गरिएको हुनुपर्दछ ।

### (ग) शिक्षण–सिकाइ रणनीति/विधिहरू (Teaching Learning Strategies / Methods)

उद्देश्यको निर्धारण एवं विषयवस्तुको छनोटपश्चात उद्देश्य पुरा गर्न विषय वस्तु सिकारुसमक्ष पुऱ्याने प्रक्रिया नै विधि हो । विद्यालय परिस्थितिमा शिक्षकद्वारा सिकारुहरूलाई विषयवस्तु प्रदान गर्ने तौरतरिका वा विधिहरूलाई नै शिक्षण-सिकाइ रणनीति वा कार्यनीति भनिन्छ । शिक्षण-सिकाइ रणनीति भनेको सिकाइसम्बन्धी क्रियाकलाप तथा विधिहरूको सङ्गठन र कार्यसम्पन्न गर्ने सीप तथा योजनाबद्ध रूपमा कार्य गर्ने कला हो । शिक्षणकला वा रणनीति नै सिकाइको उद्देश्य प्राप्त गर्ने माध्यम हो । त्यसकारण यो पनि पाठ्यक्रमको एक महत्वपूर्ण तत्व हो । पाठ्यक्रमले निर्धारण गरेका शिक्षाका उद्देश्य प्राप्त हुने वा नहुने कुरा शिक्षणविधि वा रणनीतिमा नै निर्भर गर्दछ । विषयवस्तुको स्वरूप र सिकाइको उद्देश्यअनुसार उपयुक्त विधि वा रणनीति अपनाउन सकियो भने सजिलै उद्देश्यहरू प्राप्त हुन्छन् । त्यसैले सिकारुसमक्ष पुऱ्याउने कार्य नै शिक्षण-सिकाइ रणनीति हो । कक्षा र विषयअनुसार यो फरक- फरक हुन सक्छ । त्यसैले शिक्षण-विधिहरू फरक-फरक किसिमका हुन्छन् । जस्तै : प्रवचन, प्रश्नोत्तर, छलफल, परियोजना कार्य, समस्या समाधान, क्षेत्र-भ्रमण, प्रयोगात्मक विधि, खोजविधि, समूह कार्य, व्याख्यान-विधि आदि ।

### (घ) मूल्याङ्कन (Evaluation)

कुनैपनि शैक्षणिक कार्यक्रम पाठ्यक्रमले निर्दिष्ट गरेका लक्ष्यहरू के कति पुरा भए या भएनन् भनेर गरिने लेखाजोखा नै मुल्याङ्कन हो । शिक्षण कार्य निर्धारित लक्ष्य प्राप्तीका लागी गरिन्छ । सिकारुले अपेक्षित लक्ष्यअनुसार के कति ज्ञान सिप एवंअनुभव हासिल गरे, भनेर जानकारी लिनका लागि पनि मुल्याङ्कन गर्न गरिन्छ ।

मूल्याङ्कनलाई शैक्षिक उपलब्धी लेखाजोख ागर्नेसाधनको रुपमा मात्रै नलिएर सिकारुलाई आवश्यक सल्लाह सुझाव एवं निर्देशन लिने माध्यमका रुपमा लिनुपर्दछ । मूल्याङ्कनबाट मुख्य गरी निम्नलिखित ३ वटा उद्देश्यहरूको आशा गरिन्छ ।

१ शैक्षणिक सुधार

२. सिकाइको उन्नति

३. श्रेणीकरण र स्थान निर्धारण

## पाठ्क्रम र पाठ्यांशबीचको भिन्नता

पाठ्यक्रम सिकाईको व्यापक योजना हो, जसले सिकारुको सर्वाङ्गीण विकास गर्ने उद्देश्य राखेको हुन्छ । त्यसै गरी पाठ्यांश भनेको पाठ्यक्रमको एक अंश मात्र हो,जसले कक्षाकोठामा के कति ज्ञान,सीप सिकारुलाई दिने भन्ने कुराको निर्धारण गर्दछ । पाठ्क्रम र पाठ्यांशबीचको प्रमुख भिन्नतालाई निम्नाअनुसार उल्लेख गर्न सकिन्छ ।

| पाठ्यक्रम | पाठ्यांश |
|---|---|
| पाठ्यक्रम सिकाइको एक विस्तृत योजना हो। | पठ्यांश पाठ्यक्रमको एक सानो अंश हो । |
| सिकारुको चौतर्फी विकास यसको प्रमुख लक्ष्य हो । | सिकारुलाई विषयगत ज्ञान सिप प्रदान गर्नु पाठ्यांशको प्रमुख लक्ष्य हो । |
| विषय विशेषज्ञ, अभिभावक शिक्षक, शिक्षाविद् आदिद्धारा निर्माण गरिन्छ । | केवल शिक्षक र विषय विशेषज्ञबाट निर्माण गरिन्छ । |
| उसको उद्देश्य सिकारुको वृद्धि र विकाससंग सम्बन्धित छ । | उसको उद्देशय सिकारुको षियगत सुचना उपलब्ध गराउनुसंग छ । |

## ३. केही नमूना प्रश्नहरू

नोट : हिड्न नजान्दा ढोकामा पनि लडिन्छ तर सोच बुझसाथ योजनावद्ध रुपले कार्य गर्ने हो भने तारमा हिड्न पनि सकिन्छ । भने भैंं परीक्षा सफलता प्राप्त गर्न पनि विद्यार्थीहरूले आफ्नो पठन पाठनलाई व्यवस्थित गराउनु पर्दछ । यो सामग्री खास गरी विद्यार्थीहरू/परीक्षार्थीहरूलाई परीक्षा तयारी गर्न सजिलो पुगोस भनीतयार पारिएकोले यस एकाइको अध्ययन गरी सकेपछि निम्नलिखित प्रश्नको उत्तर दिन सकेमा परीक्षामा आउन सक्ने तथा यस एकाइले ओगटेका सवै विषयवस्तुबाट आउन सक्ने प्रश्नहरू ह्ल गर्न सकिन्छ ।

१. पाठ्यक्रम भनेको के हो? लेख्नुहास् ।
२. पाठ्यक्रमको व्यापक अर्थ उदाहरण सहित लेख्नुहोस् ।
३. पाठ्यक्रमको महत्वहरुको सुची तयार पार्नुहोस्।
४. पाठ्यक्रमका तत्वहरु लेखी कुनै दुईको व्याख्या गर्नुहोस्।
५. उद्देश्यलाई किन पाठ्यक्रमको महत्वपूर्ण तत्व मानिन्छ ? व्याख्या गर्नुहोस्।
६. पाठ्यक्रम र पाठ्यांशबीच के फरक छ लेख्नुहोस्।

## ४. उत्तर संकेत तथा विशेष सल्लाह

यी माथि सोधिएका सबै प्रश्नहरूको उत्तर माथिको विषयवस्तु अध्ययन पछि सजिलै दिन सकिन्छ । जस्तै प्रश्न नं. ४ को उत्तर दिंदा सबभन्दा पहिले पाठ्यक्रम भनेको केहो त्यो लेख्नुपर्दछ अनि त्यसको तत्वहरू लेखी कुनै दुईको व्याख्या गर्नुपर्दछ सिधैं प्रकार लेखी व्यख्या गर्दा प्रश्नको पुरा उत्तर प्राप्त हुदैन । यसै कुरालाई ख्याल राखी प्रश्नको उत्तर दिन सकिन्छ ।

सर्न्दभ सामग्री :


१. आचार्य बेदराज र धामी केशव सिंह (२०६४): शिक्षाको परिचय, वागबजार, काठमाडौं, रत्नपुस्तक भण्डार ।
२. वाग्ले मनप्रसाद र ढकाल माधव प्रसाद (२०५५) शिक्षाको प्रारम्भिक परिचय, भोटाहिटी, काठमाडौं: विद्यार्थी पुस्तक भण्डार।
३. भट्टराई होमनाथ (२०६५) शिक्षाको परिचय, काठमाडौं:,इन्क्लुसिभ प्रकाशक तथा वितरक प्रा.लि. ।

एकाइ : चार

# एक पद्धतिका रूपमा शिक्षा

(EDUCATION AS A SYSTEM)

## १. एकाई परिचय

यस एकाइमा खास गरेर शिक्षा पद्धतिको अर्थ , शिक्षापद्धतिको अंग,लगानी प्रक्रिया र उत्पादन साथै लगानी प्रक्रिया उत्पादनमा पोषणको भूमिका के हुन्छ त्यसको बारेमा व्याख्या गर्न खोजिएको छ ।जसले गर्दा विद्यार्थीहरूले यस एकाईबाट सोधिने प्रश्नहरूको उत्तर सजिलै दिन सक्नेछन् । हाम्रो पाठ्यक्रमले यस एकाइका पाठ्यभार ५ घण्टाको तोकेको छ । यस एकाईमा सिकाइहरूलाई अध्ययन गर्न निम्नबमोजिम विषयवस्तुहरू समावेश गरिएको छ :

- शिक्षा पद्धतिको अर्थ
- शिक्षा पद्धतिको लगानी प्रक्रिया र उत्पादन
- शिक्षा पद्धतिमा पृष्ठपोषणको भूमिका

## २. एकाइको मूलभूत सार

### २.१ शिक्षा पद्धतिको अर्थ

सामान्यतया तोकिएको उद्देश्य हासिल गर्नका लागि गरिने सर्म्पूण शैक्षिक प्रक्रियालाई शिक्षा पद्धति मानिन्छ । शिक्षा पद्धतिअन्तर्गत मुलत लगानी, प्रक्रिया, उपलब्धी जस्ता अंगहरू पर्दछन् ।
शिक्षा पद्धतिलाई निम्न चार्टबाट स्पस्ट पार्न सकिन्छ :



यस प्रकार शिक्षामा गरिएको लगानी ,प्रक्रिया र उत्पादनका समष्टिगत रुपलाई नै शिक्षा पद्धति भनिन्छ ।

शिक्षा एक जीवनभरि चलिरहने वैज्ञानिक पद्धति हो । शिक्षाले लगानी र उपलब्धिको निर्धारण गरी त्यसलाई प्रभाव पार्दछ । सामान्य अर्थमा भन्दा कुनै निश्चित उद्देश्य प्राप्तिका लागि गरिने सबै किसिमका शिक्षाका प्रयासहरूलाई शिक्षा पद्धति भनिन्छ । यसलाई शिक्षा प्रणाली पनि भनिन्छ । शिक्षा प्रणालीभित्र विभिन्न अंगहरुले काम गरिरहेको हुन्छ । यसर्थ हामी के निष्कर्षमा पुग्दछौं भने शिक्षा पद्धतिका मुख्य तीन अङ्गहरू हुन्छन्, ती हुन्- लगानी, प्रक्रिया र उत्पादन जसको विस्तारमा तल वर्णन गरिएको छ ।

## २.२. शैक्षिक प्रणालीका लगानी, प्रक्रिया र उत्पादन (Inputs, Process and Output of an Educational System)

### १. शैक्षिक लगानी (Educational Input)

समाजको आवश्यकता पूरा गर्नका लागि कुनै पनि देशले शिक्षामा गर्ने लगानीलाई शैक्षिक लगानी भनिन्छ । शिक्षा पद्धतिको सञ्चालनका लागि उपयुक्त शैक्षिक लगानी गर्नु अति आवश्यक छ । भनिन्छ, फल राम्रो खोज्नु छ भने राम्रो बीउ, राम्रो बेर्ना तयार गरी उचित तरिकाले मलजल र हेरचाह गर्नुपर्दछ वा उचित लगानी गरिसकेपछि मात्र फल प्राप्त हुने गर्दछ । त्यसकारण उद्योगरूपी शिक्षा सञ्चालन गर्न उपयुक्त लगानी गर्नु अति आवश्यक हुन्छ । राम्रो लगानीविना राम्रो प्रतिफल खोज्नु पनि मूर्खता हुन जान्छ । खासगरी शैक्षिक लगानीअन्तर्गत निम्नलिखित तत्वहरू समावेश भएका हुन्छन् :

#### (क) शिक्षाका लक्ष्य र उद्देश्यहरू (Aims and Objectives of Education)

शैक्षिक लगानीका विभिन्न अङ्गहरूमध्ये शिक्षाका लक्ष्य तथा उद्देश्यलाई पहिलो र महत्वपूर्ण अङ्ग मानिन्छ । कुनै पनि देशमा शिक्षामा लगानी गर्दा त्यो देशमा कस्तो जनशक्ति उत्पादन गर्ने, देशलाई के कुराको खाँचो छ, त्यो अभावलाई पूरा गर्न शिक्षा नीति बनाउने भनी किटान गर्नुलाई शिक्षाका लक्ष्य वा उद्देश्य भनिन्छ । शिक्षाका लक्ष्य र उद्देश्यले सम्पूर्ण शिक्षा प्रणालीलाई दिशानिर्देश गरेका हुन्छन् ।
कुन तह पार गरिसकेपछि विद्यार्थीले के-के कुरा कसरी सिक्दछन् भन्ने कुरा शिक्षाका लक्ष्य र उद्देश्यबाट मात्र जानकारी हुने गर्दछ । समाजको आवश्यकता, देशको अवस्था र विकासका लागि आवश्यक पूर्वाधारका आधारमा शिक्षा प्रणालीलाई निर्देशित गर्ने भएकाले यसैको आधार मानी सम्पूर्ण शिक्षा प्रणाली सञ्चालन भएको हुन्छ । शिक्षाका लक्ष्य र उद्देश्यलाई नै केन्द्रविन्दु मानी शिक्षाका नीति, निर्धारित पाठ्यक्रम, शिक्षणविधि, पाठ्यसामग्री, मूल्याङ्कन प्रक्रिया निर्धारित भएका हुन्छन् । यसप्रकार शिक्षाका

**लक्ष्य र उद्देश्यका** आधारमा सम्पूर्ण शैक्षिक यात्रा सञ्चालन हुने गर्दछ। त्यसैले भनिन्छ - "An aimless man is like a rudder less ship." जसरी बहनाविनाको डुङ्गालाई गन्तव्य स्थलमा पुर्‍याउन सकिँदैन। त्यसरी नै लक्ष्य वा उद्देश्यविनाको शिक्षानीतिको सुरू र अन्त्य कहाँ-कहाँ हुन्छ थाहा पाउन गाह्रो पर्दछ। त्यसकारण उद्देश्यले शैक्षिक यात्रालाई सुनिश्चित बनाइदिन्छ ।

**त्यसकारण शिक्षाका लक्ष्य र उद्देश्यहरूलाई शिक्षाका लगानीहरूमध्ये एक महत्वपूर्ण लगानीका रूपमा समावेश गरिन्छ ।**

**(ख) विद्यार्थीहरू (Students)**

**शैक्षिक लगानीअन्तर्गत सबैभन्दा महत्वपूर्ण पक्ष नै विद्यार्थीहरू हुन् । विद्यार्थी विनाको शैक्षिक कार्यक्रमको कल्पना पनि गर्न सकिँदैन । कारखानारूपी विद्यालयमा भर्ना हुन गएका यिनै कोरा लगानीहरू भोलि उत्पादनका रूपमा दक्ष जनशक्ति बनी तयार भएर निस्कन्छन् । त्यसकारण विद्यार्थी नै नभएको खण्डमा त्यहाँको लगानी खेर जाने हुन्छ ।**

**(ग) शिक्षकहरू (Teachers)**

**कुनै पनि विद्यार्थीको सही व्यक्तित्व विकासमा शिक्षकको अहम् भूमिका रहेको हुन्छ । त्यसैले होला भन्ने गरिन्छ- "जन्म दिने काम आमाबाबुले गर्दछन् भने कर्म दिने कामचाहिँ शिक्षकले गर्दछन् ।" शिक्षक विद्यार्थीसमक्ष सधैँ एक नमुना (Model) का रूपमा प्रस्तुत हुन्छन् । शिक्षकले देखाउने व्यवहार शिक्षकको योग्यता, कार्यक्षमताको प्रभाव विद्यार्थीहरूमा पनि परिरहेको हुन्छ । कुनै कारखानाको कच्चा पदार्थका रूपमा विद्यार्थीहरू हुन्छन् भने त्यसको सञ्चालन गर्ने मिस्त्रीको काम शिक्षकहरूले गरिरहेका हुन्छन् । शैक्षिक संस्था छ, विद्यार्थीहरू छन् तर शिक्षक छैन भने त्यो संस्था चल्न सक्दैन । त्यसकारण शिक्षकको छनोट, योग्यताको निर्धारण, क्षमता, तालिम, अनुभव, कार्यभार आदिमा कुनै सम्झौता गर्नु हुँदैन । शिक्षकलाई उसको क्षमताका आधारमा नियुक्ति, बढुवा तथा स्थायी गर्नुपर्दछ । विद्यालयमा भर्ना हुनासाथ स्वत: स्थायी हुने, बढुवा हुने जस्ता प्रक्रियाले शैक्षिक उन्नति हुन सक्दैन । भनिन्छ - "एक डाक्टर असफल भएमा एक- दुई जनाको ज्यान जान सक्दछ तर एक जना शिक्षक असफल भएमा धेरै विद्यार्थीको जिन्दगी बिग्रन्छ ।" त्यसकारण समाजले अपेक्षा गरेको जनशक्तिमा हुनुपर्ने ज्ञान, सीप, दक्षता विकास गराउने जिम्मा शिक्षकमा रहेको हुन्छ । त्यस्तै गरी शिक्षकका लागि देशले तलब, भत्ता र अन्य सुविधामा धेरै लगानी गरिरहेको हुन्छ । त्यसकारण शिक्षकलाई पनि शैक्षिक लगानीका रूपमा लिइएको हुन्छ ।**

(घ) भौतिक सुविधा **(Physical Facilities)**

शिक्षा पद्धतिले राखेका उद्देश्यहरू पूरा गर्न भौतिक रूपले आवश्यक पर्ने सबै सुविधाहरूलाई भौतिक सुविधा भनिन्छ । अर्थात् शिक्षकले विद्यार्थीलाई उपयुक्त व्यावहारिक, वैज्ञानिक, ज्ञान, सीप र अभिवृत्तिको विकास गराउन आवश्यक पर्ने सुविधालाई भौतिक सुविधा भनिन्छ । शिक्षक छन्, विद्यार्थी छन्, शिक्षाको लक्ष्य एवम् उद्देश्य पनि छ तर उपयुक्त भौतिक सुविधाको अभावमा शिक्षा प्रणालीले गति लिन सक्दैन । भौतिक सुविधाहरू यति नै हुन्छन् भनी किटानी गर्न नसिकए तापनि
सामान्यतया यसअन्तर्गत निम्नलिखित कुराहरू समावेश भएका हुन्छन् :-

i. विद्यालय भवन (School building)
ii. खेल-मैदान (Play-ground)
iii. चमेनागृह (Canten)
iv. फर्निचर (Furnitures)
v. पुस्तकालय (Library)
vi. प्रयोगशाला (Laboratory)
vii. शैक्षिक सामग्री (Instructional materials)
viii. यातायात र सञ्चार (Transportation and communication)
ix. स्वास्थ्य उपचार कक्ष (Health treatment room)
x. छात्रावास (Hostel)

अत: माथी उल्लेखित संपूर्ण कुराहरूको संगठित एवं एकिकृत रुप नै भौतिक सुविधा हुन् । यी कुराहरूले प्रत्यक्ष वा अप्रत्क्ष रुपमा सहयोग पुर्‍याको हुन्छ यसरी शिक्षणलाई सफल गराउन प्रयोग गरिने लगानी नै शैक्षिक लगानी हुन् ।

(ङ) अर्थ/पुंजी

अर्थ वा पुंजीलाई एक महत्वपूर्ण लगानीका रुपमा लिन सकिन्छ , शिक्षाको उद्देश्य  विद्यार्थी र भौतिक सुविधा सवै छन् तर अर्थ छैन भने शिक्षाप्रणालीले गती लिन सक्दैन । प्रयाप्त पुंजीको अभाावमा सक्षम एवं दक्ष शिक्षक भर्ना गराउन सकिदैन । साथै समय समयमा प्रशिक्षण तथा तालीमहरू दिन सकिदैन त्यसै कारण यी कुराहरूको अभावलाई हटाउन अर्थ वा पूंजीको व्यवस्थ ागर्न अती नै आवश्यक छ खासगरी सरकारी अनुदान , शिक्षा कर शुल्क , चन्दादाता , स्थानीय सम्पती आदिबाट अर्थको व्यवस्थापन गर्न सकिन्छ ।

## ३. शैक्षिक प्रक्रिया (Educational Process)

शिक्षामा लगानी गरिएका स्रोत र साधनलाइ अधिकतम लाभ हुने गरी प्रयोग र परिचालन गर्ने कार्यलाई शैक्षिक प्रक्रिया भनिन्छ । लगानीलाई निर्धारित शैक्षिक उद्देश्यअनुरूप व्यवस्थित गर्न उपयुक्त शैक्षिक प्रक्रियाको आवश्यक पर्दछ । कुनै पनि क्षेत्रमा जब लगानी गरिन्छ, त्यस लगानीको सही सदुपयोग भएमा मात्र स्तरयुक्त उत्पादन निकाल्न सकिन्छ । त्यो कुरा शिक्षा क्षेत्रमा पनि लागू हुन्छ ।
खासगरी शिक्षा प्रक्रियामा निम्नानुसारका पक्षहरू समेटिएको हुन्छ :

### (क) शैक्षिक व्यवस्थापन (Educational Management)

शिक्षा प्रणालीलाई निर्वाद रुपमा संचालनको लागी तयार गरिएको याजनालाइ शैक्षिक व्यवस्थापन भनिन्छ । उचित शैक्षिक व्यवस्थापनको अभावमा शैक्षिक प्रक्रिया सफलतापूर्वक संचालन हुन सक्दैन । व्यवस्थापन राम्रो भएन भने प्रक्रिया पनि उपयुक्त हुन सक्दैन । व्यवस्थापनलाई उचित रूपमा सञ्चालन गर्न POSDCORB प्रक्रिया अपनाउनु अति उत्तम हुने देखिन्छ । जहाँ,

P = Planning (योजना)

O = Organizating (सङ्गठन)

S = Supervising/Staffing (निरीक्षण/कर्मचारी)

D = Directing (निर्देशन)

CO = Co-ordirating (समन्वय)

R = Reporting (प्रतिवेदन)

B = Budgeting (आर्थिक योजना)

यसप्रकार कुनै पनि शैक्षिक व्यवस्थापनका लागि योजना, सङ्गठन, निरीक्षण, निर्देशन, समन्वय र आर्थिक योजनाको आवश्यकता पर्दछ ।

### (ख) विद्यार्थी संलग्नता (Student Involvement)

विद्यालयले जतिसुकै सुन्दर योजना तथा कार्यक्रम बनाए पनि प्रधानाध्यापकले जस्तोसुकै समन्वयात्मक कार्य गरे पनि यदि विद्यालयमा विद्यार्थीको सक्रिय सहभागिता र सक्रियताविना कार्यक्रमको कुनै औचित्य नै मानिँदैन । विद्यालयमा गरिने प्रत्येक क्रियाकलापमा विद्यार्थीलाई उपयोग गरी उनीहरूको पनि राय, सल्लाह लिई कार्यक्रम सञ्चालन गर्दा त्यो कार्यक्रमको सफलता छिट्टै प्राप्त गर्न सकिन्छ ।विद्यार्थी संलग्नताले विद्यालयमा सहयोग जुटाउन भौतिक साधन र स्रोत जुटाउन सघाउ पुग्दछ । जसको फलस्वरूप विद्यार्थीहरूलाई विद्यालयप्रति भावनात्मक सम्बन्ध स्थापित हुन्छ ।

### (ग) शिक्षण कार्यक्रम (Instructional Programmes)

शिक्षण कार्यक्रमलाई पनि शैक्षिक प्रक्रियाको महत्वपूर्ण तत्व मानिन्छ किनभने शिक्षण कार्यक्रमले पाठ्क्रम पाठ्वस्तु शिक्षक र विद्यार्थीको बीचमा समन्वय स्थापित गर्ने कार्य गर्दछ । शिक्षामा गरिएको लगानीहरूको उचित किसिमको प्रतिफल लिनका लागि शिक्षण-सिकाइ क्रियाकलापहरू राम्रो हुनु जरुरी हुन जान्छ । शैक्षिक प्रक्रियामा जतिसुकै राम्रो व्यवस्थापकीय पक्ष भए पनि शिक्षण कार्यक्रम राम्रो नभएको खण्डमा त्यो उद्देश्यसम्म पुग्न कठिन हुन जान्छ ।

### (घ) विद्यार्थी प्रगतिको मूल्याङ्कन (Evaluation of Student's Progress)

शिक्षण सिकाइ क्रियाकलाप पश्चात विद्यार्थीले अपेक्षित लक्ष्य के कति हद सम्म प्रात गर्न सके , कमीकमजोरीहरू के कती रहे ,सुधारका लागी के कस्तो उपाय अवलम्वन गर्नुपर्छ भन्ने बारेमा गरिने लेखाजोखा नै विद्यार्थी प्रगती मूल्यांकन हो ।

विद्यार्थीको निरन्तर प्रगतिको मूल्याङ्कनबाट निम्नलिखित कुराको जानकारी प्राप्त गर्न सकिन्छ :

i. अभिभावकहरूलाई आफ्नो बच्चाको प्रगति विवरणको जानकारी हुन्छ ।
ii. विद्यार्थीलाई आफ्नो स्तर थाहा पाई स्वयम् मूल्याङ्कन गर्न सहयोग पुग्छ ।
iii. पाठ्यक्रमनिर्माता, पाठ्यपुस्तक लेखकलाई आवश्यक जानकारी प्राप्त हुन्छ ।
iv. शैक्षिक प्रणालीमा आवश्यक हेरफेर गर्न सहयोग पुग्छ ।

## ४. शैक्षिक उत्पादन (Educational Output)

कुनै पनि शिक्षा प्रणालीमा लगानी र प्रक्रिया सम्पन्न गरिसकेपछि परिणाम आउन थाल्दछ । त्यही परिणाम वा प्रतिफल वा शैक्षिक उपलब्धिलाई शैक्षिक उत्पादन भनिन्छ । कुनै पनि योजना वा कार्यक्रमको कार्यान्वयनपछि केही न केही फलको आशा गरिन्छ । त्यसै गरी शिक्षण प्रणालीको कार्यान्वयन पछि नतिजाको आशा गरिएको हुन्छ त्यही नतिजा नै शैक्षिक उत्पादन हो । विकसित मूलकहरूमा शिक्षमा गरिएको लगानीको करिव ९० प्रतिशतभन्दा वढी उत्पादन भएको छ भने हाम्रोजस्तो विकासन्मुख देशमा मुस्किलले २१ प्रतिशत उत्पादन हुने गरेको पाइन्छ । यसो हुनुमा चेतनाको कमि विपन्नता , न्युन लगानी प्रभावहीन कार्यक्रमको छनोटजस्ता विविध कार्यक्रमहरू हुन सक्दछन् । शैक्षिक उत्पादनलाई पूर्ण शैक्षिक उत्पादन र अपूर्ण शैक्षिक उत्पादन गरी २ भागमा विभाजन गर्न सकिन्छ ।

**(क) पूर्ण शैक्षिक उत्पादन (Finished Educational Product)**

शिक्षामा गरिएको लगानीअनुसार सम्पूर्ण प्रतिफल प्राप्त गर्नु पूर्ण उत्पादन हो । निर्धारण गरिएका निश्चित उद्देश्यहरू पूर्ण रूपमा प्राप्त गरे एक सक्षम नागरिक वा दक्ष जनशक्ति प्राप्त हुनु पूर्ण उत्पादन हो । अर्थात् शिक्षण प्रक्रियामा निर्धारित उद्देश्यअनुसारको उपलब्धि हासिल गरी तह पार गर्ने शैक्षिक उत्पादनलाई पूर्ण उत्पादन भनिन्छ । खासगरी पूर्ण शैक्षिक उत्पादन पनि निम्नानुसार तीन किसिमका छन् :

i. अदक्ष शैक्षिक जनशक्ति **(Unskilled Educational Man Power)**
ii. अर्धदक्ष शैक्षिक जनशक्ति **(Semi Skilled Educational Man Power)**
iii. दक्ष शैक्षिक जनशक्ति **(Skilled Educational Man Power)**

**(ख) अपूर्ण शैक्षिक उत्पादन (Unfinished Product)**

शिक्षा पद्धतिको उद्देश्य पूरा गर्न नसकेका जनशक्तिलाई अपूर्ण शैक्षिक उत्पादन भनिन्छ अर्थात् शिक्षण प्रक्रियामा निर्धारित उद्देश्य पूरा गर्न नसकी बीचैमा अध्ययन छाडेका वा तह पार गर्न नसकेका जनशक्तिलाई अपूर्ण शैक्षिक उत्पादन भनिन्छ । यस्तो जनशक्तिलाई अधुरो जनशक्ति पनि भनिन्छ ।
हाम्रो जस्तो आर्थिक, सामाजिक विषमता भएको देशमा व्यक्तिले विभिन्न कारणले आफ्नो ठनपाठनमा निरन्तरता दिन सक्दैनन् । जसको कारण व्यक्तिले पढाइ छाड्नुपर्ने हुन्छ । विकसित देशको तुलनामा अविकसित राष्ट्रहरूमा यस्तो उत्पादन बढी हुने हुन्छ । अनिश्चित जीवन एवम् अन्धकारमय भविष्य बोक्ने यो उत्पादन आफ्नै लागी र समाजका लागि समेत बोझ बन्न पुग्दछ । विकसित मुलुकहरूमा यस्तो जनशक्तिले रोजगारीको केही अवसर पाए पनि अविकसित मुलुकहरूमा यस्तो जनशक्तिले रोजगार पाउन कठिन पर्दछ । यस्तो अपूर्ण उत्पादनलाई निम्नलिखित भागमा बाँड्न सकिन्छ :-

(अ) तह पार नगरी बीचैमा विद्यालय छाडेका विद्यार्थीहरू **(Dropout Students)** तह पार नगरी विद्यालय बीचैमा विद्यालय छोड्नुका कारण निम्न लिखित हुन सक्दछन्।

**(i)** पारिवारिक कारण **(Family Cause):**
**(ii)** आर्थिक कारण **(Economic Cause):**
**(iii)** विद्यालयको कारण **(School Cause):**
**(iv)** सामाजिक कारण **(Social Cause)**

## २.३. शिक्षा पद्धतिमा पृष्ठपोषणको भूमिका
## (Role of Feedback in an Educational system)

शिक्षा प्रणालीका तीन महत्वपूर्ण अङ्गहरू लगानी प्रक्रिया र उत्पादन हुन् । यी तीन अङ्गहरूले एकअर्कामा घनिष्ठ सम्बन्ध राख्दछन् । मूल्याङ्कनबाट यी तीन अङ्गहरूमा के, कहाँ, किन र कसरी त्रुटि हुन गयो जसले गर्दा राखिएको उद्देश्य पूरा हुन सकेन, त्यो थाहा पाई त्यसलाई तुरुन्तै सुधार गर्ने एवम् परिवर्तन गर्ने प्रक्रियालाई पृष्ठपोषण भनिन्छ । शिक्षा पद्धतिमा पृष्ठपोषणको भूमिकालाई यसरी प्रष्ट्याउन सकिन्छ :

**लगानीमा पृष्ठपोषणको भूमिका**

१. पृष्ठपोषणले पाठ्क्रमले निर्धारण गरेको सिकाइ उपलब्धीलाई विश्लेषण गरी सुधार गर्न मद्दत पु¥याउंछ ।
२. यसले विद्यार्थीमा देखिएका कमीकशमजोरीको समाधान गर्न सहयोग पु¥याउछ ।
३. व्यक्ति समाज र राष्टको आवश्यकता पूरा गर्न शैक्षिक उद्देश्य सान्दर्भिक छ कि छैन पत्ता लगाउन सकिन्छ ।
४. शिक्षकको याजना, क्षमता एवंदक्षता पत्ता लगाउन मद्दत गर्दछ ।
५. वित्तीय एवं भौतिक सुविधाहरूको अवस्थाको मूल्यांकन गरी सुधारको लागी मार्गनिर्देशन गर्दछ ।

**प्रक्रियामा पृष्ठपोषणको भूमिका**

१. शैक्षिक कार्यक्रम प्रभावकारी रुपमा सहयोग पु¥याउछ ।
२. लगानीअनुरुप विद्यार्थीहरूको संलग्नता भए नभएको पत्ता लगाउन सहयोग गर्दछ ।
३. विद्यार्थी मूल्यांकन निरन्तर , नियमित र सुधारात्मक बनाउन सहयोग गर्दछ ।
४. विद्यालयमा हुने शिक्षण कार्यक्रमलाई समय सापेक्ष बनाउन मद्दत गर्दछ ।

**उपलब्धीमा पृष्ठपोषणको भूमिका**

१. अपेक्षित उपलब्धी पूरा भयोकि भएन पत्ता लगाउछ ।
२. शिक्षा पद्धतिले पूर्ण वा अपूर्ण कस्तो उत्पादन गर्न सक्यो त्यसको पहिचान गराउछ ।
३. लगानीबारे उत्पादन भयोकि भएन भन्ने बारे पत्ता लगाइ समस्या समाधान गर्दछ ।
४. लगानी प्रक्रिया र उत्पादन बीचमा समन्वय स्थापित गर्न सहयोग गर्दछ ।
५. पूर्ण उत्पादन जनशक्ति प्रतिस्प्रर्धी गर्न सक्ने भयो वा भएन भनी मूल्यांकन गर्न सहयोग गर्दछ ।

यसरी लगानी प्रक्रिया रउत्पादनमा पृष्ठपोषणको ठूलो भूमिका रहेको छ ।

## ३. महत्वपूर्ण प्रश्नहरू

परीक्षार्थीलाई जांचको तयारी गर्न सजिलो होस र थोरै समयमा पनि धेरै विषयवस्तुको वारेमा जानकारी प्राप्त गर्न अभ्यासको जरुरी पर्दछ । माथि उल्लेखित विषयवस्तु अध्ययन गरिसकेपछि वा यस एकाईबाट सोध्न सकिने संभाव्य प्रश्नहरूलाई तलको अभ्यासमा प्रस्तुत गरिएको छ । तल सोधिएका सवै प्रश्नहरूको उत्तर माथिको विषयवस्तुको अध्ययनबाट प्राप्त गर्न सकिन्छ ।

१. शिक्षा पद्धति भनेको के हो ? व्याख्या गर्नुहोस् ।
२. शैक्षिक पद्धतिका तत्वहरूको छोटकरीमा व्याख्या गर्नुहोस् ।
३. शैक्षिक पद्धतिका अङ्गहरूको नाम लेख्नुहोस् र कुनै दुईवटाको वर्णन गर्नुहोस् ।
४. शैक्षिक प्रणालीमा प्रक्रियाको महत्व व्याख्या गर्नुहोस् ।
५. शैक्षिक प्रणालीमा उत्पादनको भूमिकाबारे व्याख्या गर्नुहोस् ।
६. विद्यालयको भौतिक सुविधाले शिक्षण-सिकाइ प्रक्रियामा पार्ने असरहरू उल्लेख गर्नुहोस् ।
७. शिक्षालाई किन पद्धति भनिएको हो ? शिक्षण पद्धतिका तइभ्वका आधारमा पुष्टि गर्नुहोस् ।
८. शैक्षणिक पद्धतिको सुधारमा पृष्ठपोषणको भूमिका व्याख्या गर्नुहोस् ।
९. शैक्षिक लगानी, प्रक्रिया र उत्पादनबीचको अन्तरसम्बन्ध व्याख्या गर्नुहोस् ।
१०. शिक्षा प्रक्रियामा कुन-कुन कुराहरू समावेश हुन्छन् ? उल्लेख गर्नुहोस् ।
११. पठनपाठनमा विद्यार्थीको संलग्नता कसरी बढाउन सकिन्छ ?
१२. विद्यालयका आर्थिक स्रोतहरू के-के हुन् ? विद्यालयको आर्थिक अवस्थाले पठनपाठनमा कसरी असर पार्दछ ? व्याख्या गर्नुहोस् ।

## ४. उत्तर संकेत तथा विशेष सल्लाह सुझावहरू

यी माथिका प्रश्नहरूको उत्तर प्रश्नहरूको क्रम अनुशार यस एकाइको विषयवस्तुको अध्ययनबाट दिन सकिन्छ । सकभर उत्तर दिंदा आफ्नो भाषा र विषयवस्तुको गहिराइमा गै दिनु पर्दछ । प्रश्नको उत्तर कति लेख्ने भन्ने कुरा लामो प्रश्न हो वा छोटो प्रश्न के हो त्यसलाई ध्यान दिई उत्तर लेख्नुपर्दछ । जस्तै- प्रश्न नं. २ को उत्तर दिनु पर्दा पहिले शिक्षा पद्धतीको छोटो परिचय जुन माथि नै दिइएको छ, अनि त्यसका तत्वहरूको सूची बनाई ती वनाइएका सूचीहरूको छोटकरी व्याख्या गर्नुपर्दछ । जुन कुरा माथि नै एकाइमा वर्णन गरिएको छ ।

**यस एकाईको लागि सन्दर्भ सामग्रीहरू :**


१. आचार्य, बेदराज र धामी केशव सिंह (२०६४): शिक्षाको परिचय, वागबजार,काठमाडौं, रत्नपुस्तक भण्डार ।

२. वाग्ले ,मनप्रसाद र ढकाल, माधव प्रसाद (२०५५) शिक्षाको प्रारम्भिक परिचय, भोटाहिटी,काठमाडौं: विद्यार्थी पुस्तक भण्डार।

३. भट्टराई, होमनाथ (२०६५) शिक्षाको परिचय,काठमाडौं:,इन्क्लुसिभ प्रकाशक तथा वितरक प्रा.ली. ।

## एकाइ : पाँच

# महान्/विशिष्ट शिक्षाविद्हरू

(PROMINENT EDUCATIONISTS)

## १. एकाइ परिचय

यस एकाइमा विश्वका केही पूर्वीय एवम् पश्चिमी मुलुकका केही शिक्षाविद्हरुको सामान्य परिचय दिने र उनीहरुले शिक्षाको क्षेत्रमा दिएका देनहरुका बारेमा सामान्य जानकारी दिने लक्ष्य रहेको छ । पूर्वीय शिक्षाविद्हरुमा गान्धी,बुद्ध र जयपृथ्वीबहादुर सिंह छन् भने पश्चिमी शिक्षाविद्हरुमा प्लेटो, फ्रोबेल, रुसो, जोनडिवे र मेरिया मन्टेश्वरी समावेश छन् । यसबाट शिक्षा विकासको परिचय,अवधारणा,दार्शनिक विचारहरु र उनीहरुले शिक्षा क्षेत्रमा दिएका योगदानहरुका सम्बन्धमा वर्णन गर्न सक्ने उद्देश्य राखिएको छ । शिक्षाको विकास आज जुन अवस्थामा पुगेको छ, त्यसका लागि धेरै लामो समय र धेरै दार्शनिक एवम् शिक्षाविद्हरूको ठूलो लगानी रहेको छ । कैयौं दार्शनिक एवम् शिक्षाविद्हरूको चिन्तन र प्रयत्नबाट शिक्षाले वर्तमान स्वरूप पाउन सकेको हो । प्राचीन समयदेखि वर्तमानसम्म शिक्षाका विभिन्न चिन्तकहरूले विभिन्न किसिमका विचार र दृष्टिकोण विश्वसामु प्रस्तुत गरिदिए । तिनै विचार र दृष्टिकोणअनुसार शिक्षाको विषयवस्तु, शिक्षणविधि र सम्पूर्ण शैक्षिक प्रक्रिया अगाडि बढिरहेको देखिन्छ । समग्रमा भन्दा शिक्षाको विकासमा कैयौं पश्चिमेली र पूर्वेली दार्शनिक एवम् शिक्षाविद्हरूको महत्वपूर्ण योगदान रहेको छ । उनीहरूको विचार चिन्तन र दृष्टिकोण शिक्षा पद्धतिको मार्गदर्शन बन्न पुगेको छ । तीमध्ये केही प्रमुख शिक्षाविद्हरूको जीवनी र शिक्षा क्षेत्रमा गरेको योगदानको चर्चा निम्नअनुसार गरिएको छ :

## १. प्लेटो (४२७ इ.पू. - ३४८ इ.पू.) (Plato)

**शिक्षामा प्लेटोको योगदान** (Plato's Contribution to Education)

प्लेटो एक सर्वश्रेष्ठ, मौलिक र बृहत् दृष्टिकोण भएका चिन्तक मानिन्छन् । उनी आदर्शवादी दार्शनिक भएकाले एक आदर्श राज्य (Utopia) को परिकल्पना गरेका थिए । आदर्श राज्य र नागरिक तथा शिक्षासम्बन्धी दृष्टिकोणलाई उनले आफ्ना पुस्तकहरू 'द रिपब्लिक' र 'द लःज' (The Republic and The Laws) मा संवादका रूपमा अभिव्यक्त गरेका छन् । अर्का दार्शनिक रुसोका अनुसार 'द रिपब्लिक' शिक्षाको सर्वश्रेष्ठ पुस्तक हो । ("The finest treatise on education that was ever written." ( Rousseau० 'द रिपब्लिक' मा शिक्षा, धर्म, दर्शन, राजनीति आदिका विषयमा चर्चा गरिएको छ । 'द लःज' प्लेटोको परिपक्वावस्थामा लेखिएको एक बृहत् र व्यावहारिक कृति हो, जसमा शिक्षा र

नीतिशास्त्रसम्बन्धी विचार व्यक्त गरिएको छ । शिक्षा क्षेत्रमा प्लेटोको योगदानलाई निम्नअनुसार उल्लेख गरिएको छ :

(१) प्लेटोका अनुसार अन्तिम सत्य ज्ञान हो । ज्ञानद्वारा सिर्जित कुराहरू नै सत्य हुन् । ज्ञानद्वारा निर्धारण गरिएको धारणा नै शिक्षा हो । त्यसकारण इन्द्रियजन्य अनुभवलाई भन्दा ज्ञानजन्य अनुभवलाई उनले बढी महत्व दिएका छन् ।

(२) उनले ज्ञानलाई तीन भागमा विभाजन गरेका छन् । ती हुन् :-

इन्द्रियजन्य ज्ञान (Body centred knowledge), आत्मजन्य ज्ञान (Soul centred knowledge) र चिन्तनजन्य ज्ञान (Mind centred knowledge) । उनले इन्द्रियजन्य र आत्मजन्य ज्ञानलाई असत्य, अपूर्ण र अवास्तविक र चिन्तनजन्य ज्ञानलाई पूर्ण, सत्य र वास्तविक मानेका छन् । यस ज्ञानबाट नै सत्यम्, शिवम् र सुन्दरम् (Truth, Goodness and Beauty) को प्राप्ति हुन्छ । त्यसैले वास्तविक ज्ञानको स्रोत मानव चिन्तन हो ।

(३) उनले भौतिक र आध्यात्मिक संसार भनी दुई किसिमले विभाजन गरेका छन् । भौतिक संसारलाई भन्दा आध्यात्मिक संसारलाई उनले बढी महत्व दिएका छन् । उनले प्रकृतिभन्दा व्यक्ति र भौतिक वस्तु वा पदार्थभन्दा विचार प्रधान हुन्छ भन्दै आध्यात्मिक मूल्य-मान्यता, आदर्श र आत्मानुभूतिलाई प्राथमिकता दिएका छन् ।

(४) प्लेटोले प्रकृति, स्वतन्त्रता, आत्मज्ञानभन्दा किताबी ज्ञान (Bookish knowledge), अनुशासन र चरित्रनिर्माणलाई महत्व दिएका छन् ।

(५) शिक्षा प्राप्त गर्नु भनेको विभिन्न गुणहरूको विकास गर्नु हो । भद्र, विवेकशील, नैतिकता, दर्शन, विज्ञान, ललितकला, सङ्गीत, नृत्य, काव्य, साहित्य, न्याय आदि विषयहरूको ज्ञान प्राप्त गर्नु शिक्षा हो ।

(६) प्लेटोका अनुसार व्यक्ति विवेकशील र विवेकहीन अवस्थामा आत्मविकास गर्छ । विवेकशील अवस्था मन, मस्तिष्क, संयम, ज्ञान, विचार आदिसँग सम्बन्धित हुन्छ जबकि विवेकहीन अवस्था भावना, संवेग, असंयमता,वासना, तृष्णा आदिसँग सम्बन्धित हुन्छ ।

(७) शिक्षामा दीर्घकालीन स्मृति (Longterm memory) र अल्पकालीन स्मृति (Short term memory) हुन्छन् । दीर्घकालीन स्मृतिलाई वास्तविक (Actual) र अल्पकालीनलाई सम्भाव्य (Potential) भनिन्छ ।

**शिक्षाका उद्देश्य वा कार्यहरू** (Objectives or Functions of Education)

१. प्लेटोका अनुसार शिक्षाको पहिलो उद्देश्य वा कार्य राज्यको रक्षा गर्नु हो । यसका लागि राष्ट्रिय रूपमा एकता हुनु आवश्यक हुन्छ । सहयोग, सहानुभूति र भातृत्वको भावनाको विकासबाट एकताको भावना विकसित हुन्छ र एकता भएमा राज्यको रक्षा गर्न सकिन्छ ।

२. शिक्षाले राज्यका लागि आदर्श नागरिकको विकास गराउनुपर्दछ । आदर्श नागरिकद्वारा नै आदर्श राज्यको निर्माण गर्न सकिन्छ ।

३. शिक्षाले बच्चामा भएको अन्तर्निहित क्षमता/प्रतिभालाई प्रस्फुटन गराउनुपर्दछ । सुषुप्त अवस्थामा रहेको योग्यता, क्षमता, विवेकलाई जागृत गराउनुपर्दछ ।

४. शिक्षाले व्यक्तिमा सत्यम्, शिवम् र सुन्दरम् (Truth, goodness and beauty) को भावना विकास गराउनुपर्दछ ।

५. शिक्षाले ठीक र बेठीक, सत्य र असत्य, वास्तविक र काल्पनिक, लाभदायक वा हानिकारक जस्ता विरोधाभासपूर्ण तत्वहरूको पहिचान गराउनुपर्दछ ।

६. शिक्षाले व्यक्तिमा संयमताको विकास गराई आत्मनियन्त्रणमा सहयोग गर्न सक्नुपर्दछ ।

७. शिक्षाले समाजका हरेक वर्ग र व्यक्तिलाई आ-आफ्नो ज्ञान, सीप, क्षमता,विवेकको प्रयोग गरी क्रियाशील गराउनुपर्दछ ।

८. शिक्षाको अन्तिम महत्वपूर्ण उद्देश्य (कार्य सम्पूर्ण मानवीय गुणहरूको विकास गराई पूर्ण मानव बन्न सहयोग गर्नु हो ।

उपर्युक्त उद्देश्यहरू प्राप्तिका लागि प्लेटोले स्तर र उमेरअनुसार निम्नअनुसारको शिक्षाको पाठ्यक्रम उल्लेख गरेका छन् :-

१. जन्मदेखि तीन वर्षसम्म बालकलाई पौष्टिक तत्वयुक्त खानेकुरा दिएर पालनपोषण गर्नुपर्छ । यस उमेरमा उसलाई सुख र दुःख, आनन्द र पीडा दुवैको अलि-अलि अनुभव गराउनुपर्छ ।

२. तीनदेखि ६ वर्षसम्म नर्सरी शिक्षाको व्यवस्था गर्नुपर्छ । बालबालिकाहरूको स्वास्थ्यको पूरा ख्याल गर्नुपर्दछ । यस शैक्षिक कालमा उनीहरूलाई परीहरूको कथा, सङ्गीत, ईश्वर र महात्माहरूको कहानीहरू सुनाउनुपर्छ । उनीहरूलाई त्यस्ता राष्ट्रिय कथा, इतिहासहरू सुनाउनुपर्छ जसले गर्दा उनीहरूमा राष्ट्रप्रति श्रद्धा, आदर र राष्ट्रभक्तिको भावना उत्पन्न होस् । यसका साथै आत्मनिर्भरता,

सहनशीलता र साहसको शिक्षा दिनुपर्छ । खेलहरूप्रति रुचि जागरण पनि यसै समयमा गर्नुपर्छ ।

३. ६ देखि १३ वर्षसम्म बालबालिकाहरूलाई प्राथमिक शिक्षा दिनुपर्छ । यस उमेरमा उनीहरूलाई व्यायाम, खेल, घोडा सवारी, साधारण हतियार चलाउन, काव्य पढ्न, लेख्न, सङ्गीत, नृत्य, धर्म, अङ्कगणित र ज्यामितिको ज्ञान दिनुपर्छ । यसै अवधिमा शिष्टाचारको पाठ पनि सिकाउनुपर्दछ ।

४. तेह्रदेखि सोह्र (१३-१६) वर्षसम्म धार्मिक गीत, गणित तथा काव्यको अध्ययन गराउनुपर्दछ ।

५. सोह्रदेखि बीस (१६-२०) वर्षसम्म सैनिक शिक्षामा जोड दिनुपर्दछ । युवकहरूलाई व्यायामसम्बन्धी शिक्षा दिएर उनीहरूमा स्फूर्ति उत्पन्न गराउनुपर्दछ । प्लेटोका अनुसार बीस वर्षको युवकलाई कठिन परीक्षामा समावेश गर्नुपर्छ । यसबाट उसमा उच्चशिक्षा लिन सक्ने योग्यता, क्षमता, सहनशीलता छ/छैन भनेर जाँच्न सकियोस् ।

६. बीसदेखि तीस (२०-३०) वर्षसम्म उच्चशिक्षाको व्यवस्था राज्यले गर्नुपर्दछ । यस अवधिमा केही जटिल विषयहरूको ज्ञान दिनुपर्दछ । जस्तै- अङ्कगणित, ज्यामिति, सङ्गीत, सैनिक शिक्षा, नक्षत्रविज्ञान वा ज्योतिषशास्त्र आदिको ज्ञान दिनुपर्दछ ।

७. तीसदेखि पैंतीस (३०-३५) वर्षको व्यक्तिलाई दर्शनशास्त्रको अध्ययन गराउनुपर्दछ । यस अवधिमा दर्शनको अतिरिक्त मनोविज्ञान, तर्कशास्त्र, राजनीतिशास्त्र, समाजशास्त्र र कानुनको ज्ञान दिनुपर्दछ । जसले गर्दा व्यक्ति राज्यसञ्चालनमा सक्रिय रूपमा भाग लिन सकोस् । तत्पश्चात् उसलाई राज्यसञ्चालनका लागि अभिभावक (Guardian of the state) का रूपमा उच्च अधिकारी बनाउन सकिन्छ, जसको हातमा राज्य सञ्चालनको बागडोर हुन्छ र यस्तो व्यक्तिले पचास वर्षसम्म देशको शासन व्यवस्थामा रहेर रेखदेख गरी अवकाश ग्रहण गर्न सक्छ भन्ने प्लेटोको दृष्टिकोण थियो ।

प्लेटोले महिला-पुरुषको प्रकृतिमा कुनै मौलिक भिन्नता नभएको बताएका छन् । उनको विश्वास थियो कि पुरुष जुन कार्य गर्न क्षमतावान् हुन्छ, त्यस्तो सामर्थ्य महिलाहरूमा पनि हुन्छ । यद्यपि महिलामा शारीरिक बल पुरुषको तुलनामा अवश्य कम हुन्छ, तथापि उनीहरू पुरुष समान सबै कार्य गर्न सक्षम हुन्छन् । ("So far as her pursuits as well as man though in all of them the woman is weaker than man." - Plato-The Republic)

## २. **फ्रोबेल** (Froebel)

**शिक्षामा फ्रोबेलको योगदान** (Contribution of Froebel to Education)

फ्रोबेल एक विश्वप्रख्यात शिक्षाशास्त्री हुन् । उनले प्रतिपादन गरेको किन्डरगार्टेन पद्धति आज विश्वभरि कार्यान्वयन भइरहेको छ । फ्रोबेलका शैक्षणिक दृष्टिकोणलाई उनका निम्नलिखित कृतिहरूबाट प्राप्त गर्न सकिन्छ ।

(i) Education for Man (व्यक्तिका लागि शिक्षा) : यस पुस्तकमा स-साना बालबालिकाहरूका लागि शिक्षा व्यवस्था उल्लेख गरिएको छ ।

(ii) Mother Play and Nursery Song. (मातृखेल र शिशुगीत) : फ्रोबेलको मृत्युपश्चात् यस पुस्तकमा माताद्वारा शिशुखेल एवम् शिशुगीतहरूको महत्व प्रदर्शित गरेको छ ।

(iii) Education by Development (विकासद्वारा शिक्षा): यसमा विकासद्वारा शिक्षाको योजनाको मौलिक चित्रण गरिएको छ ।

(iv) Pedagogy of the Kindergaren (किन्डर गार्टेन पद्धति/विधि) : यस पुस्तकमा किन्डरगार्टेनका मूल उद्देश्यहरू एवम् किन्डरगार्टेन पद्धतिको विश्लेषण गरिएको छ ।

(v) Biography (जीवनी/आत्मकथा) : यसमा फ्रोबेलको सम्पूर्ण जीवनीलाई प्रस्तुत गरिएको छ ।

### **किन्डरगार्टेन पद्धति** (Kindergarten Approach)

किन्डरगार्टेन पद्धति फ्रोबेलको सबैभन्दा महत्वपूर्ण र प्रभावकारी शैक्षिक योगदान मानिन्छ । किन्डरगार्टेन भनेको त्यस्तो शैक्षणिक पद्धति हो जसमा बालकले स्वतन्त्रपूर्वक आफ्नै क्रियाकलापद्वारा मनोरञ्जनपूर्ण वातावरणमा सिक्ने अवसर प्राप्त गर्दछ । अर्थात् शैक्षिक वातावरणमा खेल, स्वतन्त्रता र आनन्दको प्रचुरता पाइन्छ । यसमा पूर्वनिर्धारित पाठ्यक्रम, पाठ्यपुस्तक, बौद्धिक विषय वा कार्यहरू राखिएका हुँदैनन् । बालबालिकाहरूलाई खेल्न र आफूखुसी विभिन्न क्रियाकलापहरूमा भाग लिने स्वतन्त्रता हुन्छ । तीनदेखि सात वर्षका बालकालिकाहरूका लागि यो एकदमै उपयोगी शिक्षा पद्धति हो । किन्डरगार्टेन पद्धतिमा खेलको स्थान सर्वोपरि हुन्छ । बच्चा शैशवकालदेखि नै खेलमा रुचि राख्दछ । खेलद्वारा उसलाई स्वअनुभव र स्वअभिव्यक्तिको विकास गर्ने अवसर प्राप्त हुन्छ । खेलद्वारा सिकेका

कुराहरूलाई उसले छिट्टै बुझ्न र अपनाउन सक्दछ । त्यसकारण शिक्षकको कर्तव्य बालबालिकाहरूका लागि खेल खेल्ने र सिकाउने पद्धति अनुकूल वातावरण सिर्जना गर्न उचित कदम चाल्नुपर्दछ । खेलद्वारा सिकाइको वातावरण बनाउनका लागि निम्नलिखित तीन साधनहरूको प्रयोग गरिन्छ :

(i) गीत (Songs)

(ii) हाउभाउ/भूमिका अभिनय (Gesture/Role Play)

(iii) रचनात्मक कार्य (Construction)

फ्रोबेललाई बालबालिकाहरूको जीवनको अध्ययनबाट यो कुरा प्रस्ट भयो कि उनीहरू यस उमेरमा गीत गाएर, सङ्केत गरेर तथा रचनात्मक कार्यहरूद्वारा आफ्नो विचारलाई अभिव्यक्त गर्दछन् । अतः शिक्षाशास्त्री फ्रोबेलले आफ्नो किन्डरगार्टेन पद्धतिमा बालबालिकाहरूको उचित विकासका लागि उपर्युक्त तीनवटा साधनहरूलाई अपनाउन पुगे । मातृखेल एवम् शिशुगीत (Mother play and nursery song) यसरी रचिएका थिए कि जसको भाषा एकदमै सरल, खेल नै खेलमा बालबालिकाहरूको ज्ञान वृद्धिमा सहयोग पुऱ्याउन सकोस् तथा उनीहरूको मांसपेशीहरूको अभ्यास गर्न मदत पुगोस् । किन्डरगार्टेन पद्धतिमा यस्ता ५० वटा गीतहरूको सङ्कलन गरिएको थियो । जसमा प्रत्येक गीत कुनै न कुनै खेलसँग सम्बन्धित थिए । ती गीतहरूको प्रयोजन बच्चाहरूलाई मानसिक र नैतिक खुराक प्रदान गराउनु थियो ।

## **किन्डरगार्टेन पद्धतिका विशेषताहरू** (Characteristics of Kindergarten Approach):

१.. **विद्यार्थीकेन्द्रित शिक्षण** (Child-centred teaching)

यस पद्धतिमा शिक्षण बालबालिकाहरूको स्तर, क्षमता, आवश्यकता र रुचिमा आधारित हुन्छ । सिकाइमा बालबालिकाहरू नै बढी सक्रिय एवम् क्रियाशील हुन्छन् ।

२. **खेलको भूमिका महत्वपूर्ण** (Important role of play)

यसमा खेलको भूमिका महत्वपूर्ण हुन्छ । बालबालिकाहरू खेलखेलमा नै सिक्ने गर्दछन् ।

३. **स्वतन्त्र वातावरण** (Free environment)

यसमा स्वतन्त्र प्राकृतिक वातावरण स्थापित गराइन्छ बालबालिकाहरूको रुचिअनुसार खेललाई शिक्षणको माध्यम बनाइन्छ । शिक्षकले सहयोगीको भूमिका निभाउनुपर्ने हुन्छ ।

४. **शैक्षिक सामग्रीको पर्याप्तता** (Sufficient teaching materials)

शैक्षिक सामग्रीहरूको माध्यमद्वारा सिकाइ अगाडि बढाइन्छ । खास गरेर गीत, कथा, नाटक वा अभिनय, कागजका टुक्रा, विभिन्न तस्विर र अन्य वास्तविक वस्तुहरूलाई शैक्षिक सामग्रीका रूपमा प्रयोग गरेर सिकाइलाई जीवन्त बनाइन्छ ।

५. **शारीरिक व्यायाम** (Physical exercise)

यस पद्धतिमा शारीरिक व्यायामलाई महत्वपूर्ण रूपमा लिइन्छ । त्यसैले मांसपेशीहरूको क्रियाकलापलाई पनि प्राथमिकता दिइन्छ । विभिन्न खेल र हाउभाउ, अभिनय आदिबाट शारीरिक व्यायाम हुन पुग्छ ।

६. **एकताको नियम** (Law of unity)

यस पद्धतिमा एकताको नियमका बारेमा ज्ञान दिने प्रयत्न गरिन्छ । संसारका विभिन्न वस्तुहरूमा विभिन्नता हुँदाहुँदै पनि एकता हुन्छ, सम्बन्ध हुन्छ । यसको जानकारी बालबालिकाहरूलाई गराइन्छ ।

**फ्रोबेलका अनुसार पाठ्यक्रम** (Curriculum According to Froebel)

१. फ्रोबेलले शिक्षाको पाठ्यक्रममा प्रकृतिलाई बढी महत्व दिएका छन् ।

२. शिक्षामा प्राकृतिक विज्ञान, गणित, भाषा, कला, धर्म, सौन्दर्य र नैतिक शिक्षालाई समावेश गर्नुपर्ने कुरा उल्लेख गरिएको छ ।

३. शिक्षा जीवनोपयोगी एवम् दैनिक जीवनयापनसंग सम्बन्धित हुनुपर्दछ । मानवलाई व्यावहारिक र क्रियाशील बनाउन पाठ्यक्रमले पथप्रदर्शन गर्नुपर्छ ।

४. किताबी ज्ञानले बालकलाई निष्क्रिय बनाउँछ । त्यसकारण किताबी ज्ञान (Bookish knowledge) भन्दा व्यावहारिक ज्ञानलाई प्राथमिकता दिनुपर्छ ।

५. पाठ्यक्रमले बालकलाई मानवीय गुणहरू प्रदान गर्नुपर्छ । जसले गर्दा बालक स्वच्छ, पवित्र र ईश्वरीय जीवन बिताउन सकोस् ।

६.	खेल, गीत, रचनात्मक कार्यलाई पाठ्यक्रमको अभिन्न अङ्ग बनाउनुपर्दछ ।

## ३. **रुसोको शिक्षामा योगदान** (Contribution of Rousseau to Education):

रुसो एक महान् दार्शनिक एवम् क्रान्तिकारी शिक्षाशास्त्री थिए । उनको दर्शनको प्रमुख आधार प्रकृतिवादी विचारधारा हो । समाजको तत्कालीन परिस्थितिहरूबाट पीडित रुसोको हृदयमा प्रकृतिप्रति अपार श्रद्धा उत्पन्न भयो । प्रकृतलाई नै उनले आफ्नो दर्शनको केन्द्र बनाए । उनका दर्शनका प्रमुख कृतिहरू निम्नलिखित छन् :

i. The progress of arts and science

ii. Social in equality

iii. Discourse on political economy

iv. The new holoise

v. Social contract

vi. Emile

vii. Consideration on the government of Poland

उपर्युक्त पुस्तकहरूमा रुसोले प्रकृति, बालक, शिक्षा, समाज, पदार्थ, सभ्यता, सामाजिक चालचलन र मानवसँग सम्बन्ध राख्ने विभिन्न कुराहरूमाथि तार्किक ढङ्गबाट प्रकाश पारेको छ । यी सबैमा उनको प्रकृतिवादी मोह छर्लङ्ग हुन्छ । उनले एमिल (Emile) को प्रारम्भिक पङ्क्तिहरूमा यसरी लेखेका छन् : "प्राकृतिबाट आउने सबै चिजवस्तु असल र शुद्ध हुन्छन् । तर मान्छेको हातबाट वा मानवीय क्रियाकलापबाट दूषित बन्दछन् ।" (Everything is good that comes from the hands of the author of the nature, but everything degenerates in the hands of men. - Emile) आफ्नो पुस्तक एमिलमा उनले दुई किसिमको शिक्षाको चर्चा गरेका छन् -

(१)	निषेधात्मक/नकारात्मक शिक्षा (Negative Education)

(२)	निश्चयात्मक/सकारात्मक शिक्षा (Positive Education)

## (१) **निषेधात्मक/नकारात्मक शिक्षा** (Negative Education) :

निषेधात्मक वा नकारात्मक शिक्षा त्यस्तो शिक्षा हो, जसमा बालबालिकाहरूलाई कुनै किसिमको नयाँ ज्ञान दिइँदैन । बरु उनीहरूलाई सामाजिक विकृति र अपराधहरूबाट बचाउन सजग गराउनुपर्दछ ।

निषेधात्मक शिक्षाका केही विशेषताहरू (Some characteristics of negative education)

(क) पुस्तकीय ज्ञानको अभाव (No book)

(ख) सबै प्रकारका आदतहरूको बहिष्कार (No habit)

(ग) नैतिक सिद्धान्तहरूको अभाव (No moral)

(घ) सामाजिक सम्बन्धहरूको उपेक्षा (No society)

(ङ) शिक्षकको अनावश्यकता (No teacher)

## निश्चयात्मक वा सकारात्मक शिक्षा (Positive Education)

निश्चयात्मक वा सकारात्मक शिक्षा त्यो शिक्षा हो, जसले समय आउनुभन्दा पहिले मस्तिष्कलाई तयार पार्दछ अर्थात् बालबालिकाहरूलाई प्रौढ व्यक्तिहरूको कर्तव्य सिकाइन्छ । उनीहरूलाई पछिल्लो अवस्थाको सफलताका लागि तयार गरिन्छ । यसप्रकार सकारात्मक शिक्षा भन्नाले रुसोको दृष्टिकोणमा त्यस्तो शिक्षा हो, जसले बालकहरूलाई त्यस्तो शिक्षा प्रदान गर्ने प्रयत्न गर्दछ जसको अभावमा उनीहरू स्वतन्त्र हुन सक्दैनन् । यसको अर्थ स्वतन्त्रता भन्नाले मनपरी गर्नु नभई स्वतन्त्र विचारको विकास गर्नु हो । त्यसकारण बालबालिकाहरूलाई प्रारम्भिक अवस्थामा असल कार्य गर्नका लागि अभ्यास हुनुपर्दछ । यही उनीहरूको नैतिक जीवनको पहिलो खुड्किलो हो ।

### सकारात्मक शिक्षाका केही विशेषताहरू

(क) स्वतन्त्रता प्राप्त हुनु

(ख) जीवनसम्बन्धी अनुभवहरूको ज्ञान हुनु

(ग) शरीर स्वस्थ हुनु

रुसो एक प्रकृतिप्रेमी दार्शनिक हुन् । त्यसैले कृत्रिम, बनावटी तथा प्रकृति विरोधी कुराहरूको उनले खुलेर विरोध गरेका छन् । किताबी ज्ञानको उनी विरोध गर्दछन् । शिक्षाका लागि ठूला-ठूला भवनहरू, पर्खालहरू, फर्निचरहरू, पुस्तकहरू र अन्य मानवनिर्मित भौतिक सामग्रीको उनी विरोध गर्दछन् । अठारौं शताब्दीमा रुसोले शिक्षाले बालबालिकाहरूलाई बिगारेको आरोप लगाउँदै प्रकृतितर्फ नै फर्कन भने । (Back to the nature) बालबालिकाहरूलाई प्रकृतिको काखमा फाल्नुस् (Through the chilldren in the laps of nature) भनेर शिक्षाको गुरु पनि प्रकृति नै हो भन्ने आफ्नो दृष्टिकोण राखे । उनका अनुसार बच्चाले आवश्यकतानुसार प्रकृतिमा रमाउँदै सिक्ने गर्दछन् । त्यसर्थ विद्यालयका पर्खाल भत्काइदेऊ (Break the wall of School), बालबालिकाहरूलाई स्वतन्त्र छाडिदेउ (Leave the children free) भनेर आधुनिक शिक्षा प्रणालीको विरोध गरेका छन् । उनका अनुसार मानव र कृत्रिमताले बालकलाई दूषित, अस्वस्थ बनाउँछ । स्वस्थ मस्तिष्क हुनका लागि शरीर स्वस्थ हुनु आवश्यक छ । मानवशरीर कमजोर भयो भने मस्तिष्क पनि कमजोर हुन्छ । (A fleeble body makes a feeble mind. - Emile० समस्त दूर्गुण कमजोरीका परिणाम हुन् । एउटा बच्चा यसप्रकार खराब हुन्छ किन कि ऊ कमजोर छ, उसलाई बलियो बनायो भने उसमा असल गुणहरूको प्रादुर्भाव हुने छ । ("All wickedness comes out of weakness. A child is bad because he is weak, make him strong and he will be good." - Emile)

रुसोले एमिलमा निम्न वा गरिब वर्गलाई शिक्षा दिनु हुँदैन पनि भनेका छन् । ("The poor has no need of education." ( Emile.) रुसोले गरिबहरूलाई शिक्षाको आवश्यकता हुँदैन । उनीहरूलाई श्रमिक बनाउनुपर्छ, शिक्षा धनीहरूका लागि हो भन्ने विचार राखे । तर अन्य शिक्षाविद्हरूले यस्तो किसिमको शिक्षा विरोधी कुराको आलोचना गरेका छन् ।

रुसोका अनुसार शिक्षाका उद्देश्य वा कार्यहरू (Objectives or Functions of Education According to Rousseau)

१. शिक्षाले व्यक्तिलाई स्वस्थ र सफा रहन सिकाउनुपर्दछ । स्वस्थताले शारीरिक र मानसिक विकासमा सहयोग गर्दछ । यसले गर्दा उसले आनन्द प्राप्त गर्न सक्दछ । त्यसर्थ शिक्षाले आनन्द प्राप्त गर्न सहयोग गर्नुपर्दछ ।

२. प्राकृतिक नियमअनुसार बालकले आफैं सिक्ने किसिमको शिक्षा हुनुपर्दछ ।

३. शिक्षामा स्वतन्त्रताको गुण हुनुपर्दछ ।

४. किताबी ज्ञानलाई निरुत्साहित गर्नुपर्दछ ।

५. शिक्षा व्यावहारिक, कार्यमूलक र जीवनोपयोगी हुनुपर्दछ ।

६. यसले नैतिक, सामाजिक, धार्मिक, शारीरिक गुणहरूको विकास गर्नुपर्दछ ।

७.	शिक्षा रुचिपूर्ण हुनुपर्दछ ।

८.	फुर्सदको समयको सदुपयोग गर्ने किसिमको शिक्षा हुनुपर्दछ । उपर्युक्त उद्देश्यहरूको प्राप्तिका लागि रुसोले बालबालिकाहरूको अवस्थाअनुसार निम्न किसिमको पाठ्यक्रमको व्यवस्था गरेका छन् :

(१)	**शैशवावस्था** (Infants) : **जन्मदेखि ५ वर्षसम्म**

यस अवस्थामा शिक्षाको उद्देश्य शारीरिक विकाससँग सम्बन्धित हुनुपर्दछ । त्यसकारण खेलकेन्द्रित शिक्षा हुनुपर्दछ । खेलद्वारा साधारण शारीरिक व्यायाम हुने किसिमको शिक्षा दिनुपर्दछ ।

(२)	**बाल्यावस्था** (Childhood) : **५ देखि १२ वर्षसम्म**

यस अवस्थामा शिक्षा शारीरिक क्रियाकलापकेन्द्रित हुनुपर्छ । नैतिक ज्ञान,सामाजिक ज्ञानलाई बच्चाले बुझ्न सक्दैन । प्रकृतिको नियमअनुसार बच्चालाई बच्चा नै रहन दिनुपर्दछ । बालकमा उच्च ज्ञान, सीप, जबरजस्ती लाद्नु हुँदैन । तर नकारात्मक क्रियाकलाप, बानी-व्यहोराबाट जोगाउनुपर्दछ । आर्जित पूर्वज्ञानलाई सञ्चालन गर्ने किसिमको शिक्षा दिनुपर्दछ ।

(३)	**किशोरावस्था** (Adolescence) : **१२-१५ वर्षसम्म**

रुसोका अनुसार किशोर-किशोरीहरूलाई स्वावलम्बी र शक्तिशाली हुने किसिमको शिक्षा दिनुपर्दछ । यो अवस्था जिज्ञासु हुने हुँदा प्रकृति, विज्ञान, कला, सौन्दर्य, जीवनोपयोगी क्रियाकलाप, तार्किक ज्ञान र अन्वेषणसम्बन्धी शिक्षाको व्यवस्था गरिनुपर्दछ ।

(४)	**वयस्क अवस्था** (Adulthood) : **१५-२० वर्ष**

रुसोका अनुसार अब बालबालिकाहरू वयस्क अवस्थामा प्रवेश गरिसकेका हुन्छन् । त्यसैले उनीहरूलाई स्वावलम्बी हुने, परिश्रम गर्ने, विभिन्न भावना र नैतिक सामाजिक गुणहरूको विकास गर्ने अवसर दिनुपर्दछ ।

**शैक्षिक प्रक्रिया वा विधि** (Educational Process or Method)

१.	शिक्षणविधि वा शैक्षिक प्रक्रिया बालकेन्द्रित हुनुपर्दछ ।

२.	शिक्षणविधि वा प्रक्रिया मनोरञ्जनपूर्ण र आनन्ददायी हुनुपर्दछ ।

३. स्वक्रियाकलापमा आधारित हुनुपर्छ ।

४. सजाय र कडा अनुशासन हुनुपर्दछ ।

५. व्यवहारिक ज्ञानमा आधारित हुनुपर्दछ ।

६. प्रकृतिलाई नै सर्वोपरि मान्नुपर्दछ ।

७. आगमनविधि, गरेर सिक्ने, अनुभवद्वारा सिक्ने, खेलेर सिक्ने, खोजविधि आदिको प्रयोग गरिनुपर्दछ ।

८. पुस्तकीय ज्ञानभन्दा अनुभवीय ज्ञानलाई सिकाइको साधन बनाउनुपर्दछ ।

## ५. **जोन डिवे** (John Dewey 1857 - 1952) **को शिक्षामा योगदान** (Contribution of John Dewey to Education)

जोन डिवे सामाजिकीकरण र ज्ञानको प्रमुख स्रोत विद्यालयलाई मान्दथे । उनले भनेका छन् - "विद्यालय समाजको लघु रूप हुनुपर्दछ ।" (School must be a miniature society) यसले सिकारुलाई सामाजिक वास्तविकता र सामाजिक प्रविणताको विकास गर्नका लागि सिकाउनुपर्दछ । (I should teach social reality and must faster social efficiency in the learner's.) शिक्षालाई दर्शनशास्त्रको प्रयोगशाला मान्ने जोन डिवेले अमेरिकामा 'University Elementary School' नामक एउटा 'Laboratory School' स्थापना गरे । यो त्यस्तो एउटा प्रयोगशाला थियो, जसको प्रमुख उद्देश्य प्रयोजनवादी शिक्षासम्बन्धी दर्शनलाई प्रयोगात्मक रूपबाट लागु गर्नु र आफ्नो दृष्टिकोणको प्रसार गर्नु थियो । उनले आफ्नो प्रयोजनवादी विचारधाराको दार्शनिक दृष्टिकोणलाई व्यापक रूपमा प्रचारप्रसार गर्न करिब ५०० वटा पुस्तक र ८०० जति लेख-रचनाहरू प्रकाशन गरे । उनका केही प्रमुख पुस्तक एवम् रचनाहरू यसप्रकार छन् :

-Interest and effort as related to will.

- The school and society.

- Studies in logical theory.

- How we think.

- Democracy and education.

- School of tomorrow.

- Education today.

- Liberalism and social action.

- The child and the curriculum.

- Reconstuction in philosophy.

- Philosophy of education etc.

(ग) जोन डिवेका अनुसार शिक्षाका उद्देश्य तथा कार्यहरू (Objectives and Functions of Education According to John Dewey)

१. शिक्षाले सामाजिक प्रवीणता वा कुशलतामा विकास गर्नुपर्दछ ।

२. शिक्षाले तत्कालीन आवश्यकता पूरा गर्न सहयोग गर्नुपर्दछ ।

३. यसले नयाँ मूल्य-मान्यताहरूको निर्माण गर्नुपर्दछ ।

४. शिक्षाले अनुभवहरूको पुनर्निर्माण र पुनर्सङ्गठन गर्न सहयोग गर्नुपर्दछ ।

५. शिक्षाले व्यक्तिलाई कुनै पनि सामाजिक वातावरणमा समायोजन हुन सक्ने क्षमता प्रदान गर्नुपर्छ ।

६. बालकेन्द्रित शिक्षा हुनुपर्दछ ।

७. शिक्षाले बालबालिकाहरूलाई आफैं गर्ने, क्रियाशील हुने, प्रयोग परीक्षण गर्ने अवसर दिन सक्नुपर्छ ।

८. शिक्षा गतिशील, परिवर्तनशील र सकारात्मक प्रभाव पार्न सक्ने हुनुपर्छ ।

९. शिक्षा व्यावहारिक हुनुपर्छ ।

## ५. **शिक्षामा मारिया मन्टेसोरी** (Maria Montessori : 1870 - 1952) **को योगदान** (Contribution of Montessori to Education)

मारिया मन्टेसोरी एक मौलिक, कुशल, व्यवहारवादी एवम् प्रयोगवादी शिक्षाविद्का रूपमा चिनिन्छिन् । उनको शिक्षा पद्धति आज शिक्षा क्षेत्रमा एकदमै प्रचलित र लोकप्रिय हुँदै गइरहेको छ । साना बालबालिकाहरूका लागि मन्टेसोरी पद्धति एक सर्वश्रेष्ठ शिक्षा प्रणाली मानिन्छ । मन्टेसोरीको महत्वपूर्ण देन भनेको उनले ज्ञानेन्द्रियहरूको प्रशिक्षण एवम् बालमनोविज्ञानमा विशेष जोड दिएको छ । बालमनोविज्ञान बुझेर उपर्युक्त स्थान, खेल, गीत र प्रयोगद्वारा सिकाउने गरियो भने जुनसुकै क्षमताको विद्यार्थीले पनि सिक्न सक्छ भन्ने उनको विश्वास थियो । स-साना बच्चाहरू, सुस्तः मनस्थितिका बच्चाहरू र अन्य अपाङ्ग

बच्चाहरूलाई यही विधिद्वारा शिक्षित बनाउन कैयौं शैक्षणिक संस्थाहरूले प्रयत्न गरिरहेका छन् ।

(ग) किन्डरगार्टेन पद्धतिका प्रमुख सिद्धान्त वा योगदान (Contribution or Major Pinciples of Kndergarten Aproach) बालबालिकाहरूलाई शिक्षा दिनका लागि किन्डरगार्टेन पद्धति एकदमै प्रभावकारी मानिन्छ । यस पद्धतिमा केही सिद्धान्तहरू छन् । यी सिद्धान्तहरू नै मन्टेसोरी शिक्षा पद्धतिका प्रमुख योगदान हुन् ।

**(१) शिक्षा : बालकको आन्तरिक विकास**

मन्टेसोरीले बालकको आन्तरिक शक्तिको विकासका लागि शिक्षालाई नै प्रमुख रूपमा लिएको पाइन्छ । उनका अनुसार जसरी एउटा वृक्षको विकास उक्त वृक्षको बीउमा निहित हुन्छ । वृक्षको विकासका लागि सम्पूर्ण शक्तिहरू बीउद्वारा प्राप्त हुन्छ । त्यसरी नै बालकको आन्तरिक क्षमताको विकास गराई व्यक्तित्व विकास गराउने प्रमुख कार्य शिक्षाको हो ।

**(२) स्वतन्त्रताको सिद्धान्त**

मन्टेसोरीको दृष्टिकोणअनुसार बालबालिकालाई आङ्ना भावनाहरू, संवेगहरू, विचारहरू, योग्यता र रुचिहरू आदि व्यक्त गर्न पूर्ण स्वतन्त्रता हुनुपर्दछ । स्वतन्त्रताको अभावमा उनीहरूको स्वाभाविक शक्तिहरूको विकास अवरुद्ध र कुण्ठित हुन्छ । यस स्थितिमा उनीहरूको आत्मविश्वास, आत्मनिर्भरता र स्वावलम्बन आदि गुणहरूको अभाव हुन जान्छ ।

**(३) शिक्षाको आधार : खेल**

मन्टेसोरी शिक्षा पद्धतिमा खेलद्वारा शिक्षा दिनका लागि जोड दिइएको छ । खेलमा बच्चाहरू बढी स्वतन्त्र हुन्छन् । स्वतन्त्र हुँदा नै आन्तरिक क्षमताहरूको विकास सम्भव हुन्छ । मन्टेसोरीका अनुसार बालकले महिनौं लगाएर सिक्ने कुरा खेलद्वारा एकै छिनमा सिक्न सक्छ । खेलद्वारा बालबालिकाहरूको शारीरिक, मानसिक र संवेगात्मक विकास हुन्छ । खेलमा उनीहरूको रचनात्मक क्षमता देख्न सकिन्छ । खेलद्वारा उनीहरूमा अनुशासनको पनि विकास हुन पुग्छ । मन्टेसोरीले खेलको विकासका लागि विभिन्न किसिमका शिक्षायन्त्र तथा सामाग्रीहरूको निर्माण गरेका थिए ।

**(४) मांसपेशीहरूको कसरत**

मन्टेसोरी पद्धतिद्वारा मांसपेशीहरूको पर्याप्त कसरत हुन्छ, जसले गर्दा बालक फुर्तिलो, स्वस्थ्य र क्रियाशील बन्न सहयोग पुग्छ ।

**(५) ज्ञानेन्द्रियहरूको प्रशिक्षण**

हाम्रा ज्ञानेन्द्रियहरू (Sense Organs) तीनदेखि सात वर्षसम्म बढी सक्रिय रहन्छन् । अतः यस अवधिमा ज्ञानेन्द्रियहरूको उचित विकास हुनुपर्दछ ।

**(६) पाठ्यवस्तुको निर्धारण**

मन्टेसोरीले पूर्वनिर्धारित पाठ्यवस्तुको विरोध गरिन् । उनका अनुसार बालबालिकाहरूको रुचि, आवश्यकता, अवस्थाअनुसार पाठ्यवस्तु निर्माण गर्नु पर्छ । पूर्वनिर्धारित पाठ्यवस्तु प्रभावकारी नहुन सक्छ ।

**(७) शारीरिक दण्डको विरोध**

शिक्षणका क्रममा बालबालिकाहरूलाई शारीरिक रूपमा दण्ड सजाय दिनु हुँदैन । मनोवैज्ञानिक रूपबाट अभ्यास गराएर विभिन्न क्षमताहरूको विकास गराउनुपर्दछ । माया र स्नेहद्वारा बालमस्तिष्कलाई जित्न सकिन्छ ।

**(८) स्वअनुभवद्वारा शिक्षा**

किताबी ज्ञानलाई मन्टेसोरीले महत्व दिएका छैनन् । बालबालिकाहरूलाई प्रशिक्षण दिएर, अभ्यास गराएर, क्रियाकलापमा भाग लिने अवसरको सिर्जना गरेर,खेल खेलाएर, आफ्नै अनुभवद्वारा सिक्ने वातावरणको सिर्जना गर्नुपर्दछ । शिक्षकले कुनै किसिमको हस्तक्षेप गर्नु हुँदैन । शिक्षकले सहजकर्ता (Facilator) को भूमिका खेल्नुपर्दछ ।

६. **शिक्षामा महात्मा गान्धी** (Mahatma Gandhi :1869 - 1948) **को योगदान** (Contribution of Gandhi to Education):

शिक्षाका क्षेत्रमा महात्मा गान्धीको योगदानलाई महत्वपूर्ण रूपमा लिइन्छ । शिक्षाको लक्ष्य के हुने भन्ने सम्बन्धमा उनले 'हरिजन पत्रिका' मा यसरी लेखेका थिए- "शिक्षा भन्नाले मेरो अभिप्राय बालकको साक्षरता र व्यक्तिको शरीर, मन तथा आत्माका उत्कृष्ट एवम् सर्वाङ्गीण विकास हो । साक्षरता शिक्षाको अन्तिम विन्दु होइन न कि प्रारम्भ । यो त पुरुष र महिलालाई शिक्षित गर्ने साधन हो । केवल साक्षरतालाई आफैंमा शिक्षा भन्न सकिंदैन ।) यस परिभाषाबाट के प्रस्ट हुन्छ भने गान्धीजी भारतीय बालबालिकाहरूको सर्वाङ्गीण विकास चाहन्थे न कि एकपक्षीय । उनले भारतको राजनीतिक, सामाजिक र आर्थिक अवस्थाअनुसार नै शिक्षाको परिकल्पना गरे । उहाँको शिक्षा दर्शन प्रकृतिवाद, आदर्शवाद र प्रयोजनवादबाट प्रभावित छ ।" (By education I mean an all round drawing out of the best in child and man body, mind and sprit. Literacy is not end of education nor even the beginning. It is one

of the means where by man and woman can be educated. Literacy in it self is no education." - 'Harijan' dated 31-3-1937. M.K. Gandhi.)

**गान्धीका अनुसार शिक्षाका उद्देश्य वा कार्यहरू** (Objectives or Functions of Education According to Gandhi)

एम.के. गान्धीले शिक्षाका उद्देश्यलाई दुई भागमा बाँडेका छन् :-

१. **शिक्षाको तत्कालीन उद्देश्य** (Immediate Aim of Education) **:-**

(i) जीविकोपार्जनसम्बन्धी उद्देश्य : शिक्षाले बालबालिकाहरूलाई जीविकोपार्जनका लागि सक्षम बनाउनुपर्दछ ।

(ii) सांस्कृतिक उद्देश्य : शिक्षाले बालबालिकाहरूलाई आफ्नो संस्कृतिका बारेमा ज्ञान दिनुपर्दछ ।

(iii) सामञ्जस्यपूर्ण विकासको उद्देश्य : शिक्षाले व्यक्तिको शारीरिक, मानसिक, आध्यामिक शक्तिहरूको विकास गराई उसको सामञ्जस्यपूर्ण विकास गर्नुपर्दछ ।

(iv) नैतिक वा चारित्रिक विकासको उद्देश्य : शिक्षाले बालकको नैतिक एवम् चारित्रिक विकासमा सहयोग गर्नु पर्छ

(v) मुक्तिको उद्देश्य : शिक्षाले व्यक्तिमा आत्मविश्वास बढाएर आर्थिक, सामाजिक, राजनीतिक दासताको बन्धनबाट मुक्त गर्नुपर्दछ । यसले जनतालाई स्वतन्त्र हुन प्रेरित गर्नुपर्दछ ।

२. **शिक्षाको सर्वोच्च उद्देश्य** (Ultimate Aim of Education)

गान्धीका अनुसार शिक्षाको सर्वोच्च उद्देश्य वास्तविकताको अनुभव, ईश्वर र आत्मानुभूतिको ज्ञान गराउनु हो ।

**गान्धीको शैक्षिक नीति** (Educational Policy of Gandhi)

गान्धीले गरीब, अशिक्षित, अपाङ्ग, अशक्त बच्चाहरूलाई आत्मनिर्भरताका लागि शिक्षा दिने नीति लिएका थिए । सातदेखि चौध वर्षका बालबालिकाहरूलाई शिक्षा निःशुल्क, अनिवार्य र शिक्षा सर्वव्यापी दिइनुपर्दछ भन्ने उनको नीति थियो ।

राष्ट्रभाषा वा मातृभाषाका माध्यमबाट राष्ट्रिय विकासको आवश्यकतामा आधारित शिक्षा हुनुपर्दछ भन्ने कुरामा उनले जोड दिएका थिए । उपर्युक्त नीतिअनुसार गान्धीले बुनियादी शिक्षा पद्धतिलाई कार्यान्वयन गरेका थिए । उनले सन् १९११ मा ट्रांसवालमा टाल्सटाय आश्रमको स्थापना गरे, जहाँ हिन्दू, मुसलमान, पारसी र इसाई विद्यार्थीहरू पढ्दथे । सन् १९१५ मा सावरमती आश्रम र १९२० मा गुजरात विद्यापिठ स्थापना गरे । २२ र २३ अक्टोबर १९३७ मा वर्धाको मारवाडी हाइस्कुल ( वर्तमानमा नवभारत विद्यालय) मा महात्मा गान्धीको सभापतित्वमा भारतका शिक्षाशास्त्रीहरूको एउटा भेला बोलाइयो । यस भेलाले बुनियादी शिक्षा (आधार शिक्षा) को आधारपत्र पारित गऱ्यो । यस आधार शिक्षाको अवधारणा पत्रले अनिवार्य र निःशुल्क शिक्षामा जोड दिएको थियो । यसले शिक्षामा मातृभाषाको प्रयोग, ग्रामीण क्षेत्रलाई प्राथमिकता, क्रियाकलापमुखी शिक्षा,आत्मनिर्भरताको शिक्षा, व्यावसायिक शिक्षा, सहभागितामूलक, आवश्यकतामा आधारित, स्वदेशीय शिक्षा र एकीकृत शिक्षामा विशेष जोड दिएको पाइन्छ । यस्तो शिक्षा पद्धतिबाट मात्र देश र जनताको विकास सम्भव छ भन्ने कुरा गान्धीवादी शिक्षा नीतिको निष्कर्ष थियो ।

**गान्धीका अनुसार शिक्षाको पाठ्यक्रम** (Curriculum of Education According to M.K. Gandhi)

महात्मा गान्धीले बुनियादी शिक्षा पद्धति (Basic education system)लाई चारभागमा विभाजन गरेका थिए -

१. पूर्वबुनियादी शिक्षा : यो शिक्षा पद्धति शिशु अवस्थादेखि सात वर्षसम्मका स-साना बालबालिकाहरूका लागि हो ।

२. बुनियादी शिक्षा : यो शिक्षा व्यवस्था सात वर्षका बालकदेखि चौध वर्षसम्मका किशोरहरूका लागि हो ।

३. उत्तरबुनियादी शिक्षा : यो शिक्षा व्यवस्था चौधदेखि उन्नाइस (१४-१९) वर्षसम्मका किशोरहरूका लागि हो ।

४. प्रौढ शिक्षा : यो शिक्षा उनले प्रौढ वयस्क व्यक्तिहरूका लागि तय गरेका थिए ।

माथि उल्लिखित शैक्षिक व्यवस्थाहरूका लागि गान्धीले निम्नअनुसारको पाठ्यक्रमको व्यवस्था गरेका थिए :

१. आधारभूत हस्त शिल्पकला : यसअन्तर्गत विभिन्न हस्तकलासम्बन्धी सीपहरूको व्यवस्था गरिएको छ । जसमध्ये कुनै एकलाई छनोट गर्न

सकिन्छ । तीमध्ये माटोको काम, कृषि, कताइ बुनाइ, काठको काम, छालाको काम, माछापालन, कागजको काम, गृहविज्ञान, पाक शिक्षा आदि प्रमुख हुन् ।

२. मातृभाषा

३. गणित

४. सामाजिक विषय : इतिहास, भूगोल, नागरिकशास्त्र

यसअन्तर्गत विशेषतः भारतीय इतिहासको रूपरेखा, सामाजिक एवम् भौगोलिक वातावरण र नागरिक जीवनसम्बन्धी ज्ञानको शिक्षा दिइन्छ ।

५. सामान्य विज्ञान :- यसमा प्रकृति अध्ययन, वनस्पतिशास्त्र, प्राणीशास्त्र,

रसायनशास्त्र, स्वास्थ्यविज्ञान, नक्षत्रहरूको ज्ञान, महान वैज्ञानिक एवम् अन्वेषणकर्ताहरूको कथा आदि समावेश थिए ।

६. हिन्दी (जहाँ हिन्दी राष्ट्रभाषाका रूपमा प्रयोग गरिंदैन)

७. कला-चित्रकला र सङ्गीत

८. शारीरिक शिक्षा :- व्यायाम र खेलकुद

यसप्रकार महात्मा गान्धीले शिक्षा क्षेत्रमा पनि आफ्नो दार्शनिक चिन्तनको छाप छोडेका छन् । उनले शिक्षाका उद्देश्य शैक्षिक नीति, शिक्षाको पाठ्यक्रम आदि प्रतिको स्पष्ट दृष्टिकोण दिएर महत्वपूर्ण योगदान पुऱ्याएको स्पष्ट हुन्छ । गान्धीले व्यावसायिक, स्वावलम्बन र नैतिक शिक्षामा विशेष जोड दिएका थिए । त्यस्तै सत्य, अहिंसा, प्रेम, निर्भयता, स्वतन्त्रता, जीवनदर्शन, स्त्री-पुरुष समान शिक्षा, क्रियाकलापमुखी शिक्षा आदिलाई पाठ्यक्रममा समेट्ने प्रयत्न गरेका छन् । उनी सत्य र अहिंसाका पुजारी थिए । सबै धर्म र सम्प्रदायमा उनी समान किसिमको विश्वास र आदर गर्दथे ।

## ७. बुद्ध दर्शनको शिक्षामा योगदान (Contribution of Buddha's Philosophy to Education)

लामो समयसम्मको कठोर तपस्याबाट बुद्धले ज्ञान प्राप्त गरे । ज्ञान प्राप्त गरेपश्चात् नै उनलाई भगवान् गौतम बुद्ध भनिन थालिएको हो । प्राप्त अलौकिक ज्ञानलाई उनले धर्मोपदेशको माध्यमबाट प्रचार-प्रसार गरे । त्यही धर्मोपदेश (बुद्धले दिएका धार्मिक उपदेशहरू) लाई नै बौद्ध दर्शन (Buddhism Philosophy) भनियो । उनका अनुसार ज्ञान प्राप्त गर्न शिक्षा नभई हुँदैन । शिक्षा र ध्यान नै ज्ञान प्राप्तिको मार्ग हो ।

त्यसकारण गौतम बुद्धले शिक्षालाई निकै महत्व दिएको पाइन्छ । शिक्षामा बुद्ध दर्शनको योगदानलाई बुझ्न शिक्षाका उद्देश्यहरू, पाठ्यक्रम, शिक्षण विधि र शिक्षक तथा विद्यार्थीहरूको भूमिका बुझ्नु आवश्यक हुन्छ ।

(i) **शिक्षाका उद्देश्यहरू** (Objectives of Education)

बुद्ध दर्शनअनुसार शिक्षाका प्रमुख उद्देश्यहरू ज्ञान प्राप्त गर्नु (To achieve Knowledge), अनुशासन वा असल व्यवहार निर्माण (Discipline or formation of good behavriour) र समाधि/मोक्षप्राप्ति (Meadiation) हुन् । शिक्षाको प्रमुख आधार पनि यी तीनै कुराहरूको प्राप्ति हो । यी आधारहरूको प्राप्ति चार आर्य सत्य (Supreme truth) अन्तर्गतका अष्टमार्गहरूको अनुसरणबाट मात्र हुन्छ । अष्टमार्ग भन्नाले विद्यार्थीले चोरी, जीवहत्या, असत्यवाणी (झूटो बोल्ने , खराब आचरण, मादक पदार्थ, हिंसा, व्यभिचार, रन्डीबाजी गर्नु हुँदैन । यी मानवका दुःख र विनाशका कारण हुन् । यिनीहरूबाट छुटकारा पाउन विद्यार्थीलाई यिनीहरूप्रति घृणाको भावना उत्पन्न गराउने शिक्षाको उद्देश्य हुनुपर्छ, खराब तत्वहरूप्रति घृणा जगाउनु नै असल मार्ग अवलम्बन गर्नु हो । असल मार्गले असल कर्म प्राप्ति हुन्छ । बौद्ध दर्शनका यी उद्देश्यहरूलाई पौराणिक कालदेखि हालसम्म पनि बौद्ध भिक्षुहरू, लामाहरू,धर्मगुरुहरूले बौद्ध विहार, मठ, गुम्बा र अन्य शैक्षिक संस्थाहरूमा कार्यान्वयन गर्दै आएको पाइन्छ ।

(ii) **बौद्ध शिक्षाको पाठ्यक्रम** (Curriculum of Buddhist Education)

बौद्ध दर्शनमा शिक्षाको पाठ्यक्रमको प्रमुख स्रोत त्रिपिटक हो । यसलाई बौद्ध धर्म ग्रन्थ पनि भनिन्छ । यसमा गौतम बुद्धका उपदेशहरू, दृष्टिकोण, मानवीय सत्कार्यहरू, ज्ञानप्राप्तिका मार्गहरू, दुःखकष्टका कारणहरू, दुःखबाट मुक्ति पाउने मार्गहरू (उपायहरू) आदिका बारेमा उल्लेख गरिएको छ । बौद्ध दर्शनमा शिक्षालाई प्राथमिक र उच्च गरी दुई किसिमले विभाजन गरेको छ । प्राथमिक शिक्षाअन्तर्गत शब्दविधा, तर्कविधा, चिकित्साविधा, आध्यात्मिक विधा र शिल्पविधाको ज्ञान दिइन्थ्यो । उच्चशिक्षाको पाठ्यक्रममा पुरै धार्मिक विषयवस्तु हुन्थ्यो । प्राथमिक तहको शिक्षा भिक्षु-भिक्षुणीहरूलाई दिइन्थ्यो भने दोस्रो तहको शिक्षा साधारण नागरिकका लागि हुन्थ्यो । यी सबै विषयवस्तुको मूल स्रोत त्रिपिटक (Three boxes of knowledge) नै हो । यसका तीनवटा अंशहरू यसप्रकार छन् :-

**(१) अभिधम्म पिटक** (Philosophical Code of Buddhism)

यसमा बौद्ध दर्शनसम्बन्धी ज्ञानको विषयवस्तु समावेश गरिएको छ । बौद्ध शिक्षा अध्यनार्थी विद्यार्थीका लागि यो पाठ्यक्रम राखिएको हो । यसैका आधारमा बौद्ध दर्शनको ज्ञान दिइन्छ ।

**(२) सुत्त पिटक** (Religious Doctrine)

बुद्ध धर्मको अध्ययन-मनन गर्ने शिक्षार्थीलाई विस्तृत रूपमा यस धर्मको ज्ञान गराउन पाठ्यक्रममा सुत्त पिटक वा धार्मिक सिद्धान्तलाई अवगत गराइन्छ ।

**(३) विनय पिटक** (The Box of Moralistic Code)

यसमा धार्मिक नीति, आचरण, अनुशासन, व्यवहार आदिका बारेमा विस्तृत ज्ञान उल्लेख गरिएको छ ।

यसका साथै मूर्तिकला, चित्रकला, हस्तकला, भवन निर्माण, प्राविधिक शिक्षा, चिकित्सा शिक्षा आदिको पनि व्यवस्था गरिएको थियो । तक्षशिला, विक्रमशिला, नालन्दा र बल्लभी विश्वविद्यालयमा बौद्ध दर्शनको पढाइ हुन्थ्यो । शिक्षाको माध्यम भाषा 'पाली' थियो । बुद्ध धर्मअन्तर्गत विभिन्न सम्प्रदायहरू रहेका छन् । जस्तै : महायान, हीनयान, ब्रजयान र लामावाद । यी सम्प्रदायहरूको शिक्षा, शिक्षणविधि, विषयवस्तु आदिमा केही भिन्नता पाइन्छन् । बौद्ध दर्शनको शिक्षा दिने प्रमुख विधिहरूमा व्याख्यान, प्रश्नोत्तर, प्रवचन, अन्तरक्रिया र छलफल आदि पर्दछन् । आवश्यकताअनुसार यी विधिहरूको प्रयोगबाट विद्यार्थीहरूलाई शिक्षण गर्न सकिन्छ ।

(iv) **विद्यार्थीको भूमिका** (Role of the Students)

बौद्ध शिक्षा दर्शनमा बालकलाई ६ वर्ष पुगेपछि शिक्षाका लागि तयार गरिन्छ । बालकमा बौद्ध शिक्षा प्राप्त गर्नका लागि तयार गरिन्छ । बालकमा बौद्ध शिक्षा प्राप्त गर्नका लागि आवश्यक पूर्वाधार निर्माण गरिन्छ । यसलाई प्रवज्जा संस्कार (The first ordination) भनिन्छ । यसमा गुरुले विद्यार्थीलाई शिक्षाका लागि तयार गरिसकेपछि शपथ खुवाउने गर्दछन् । "बुद्धम शरणम् गच्छामि, धम्मम शरणम् गच्छामि" अर्थात् बुद्धको शरणमा जान्छु, धर्मको शरणमा जान्छु । धर्मको नियम वा बुद्ध दृष्टिकोण मलाई स्वीकार्य छ । म पूरा-पूरा पालना गर्ने छु भनेर विद्यार्थीले शपथ लिनुपर्ने हुन्छ । यस अवस्थामा गुरुले आङ्ना शिष्यहरूलाई १० वटा आदेशहरू दिएर पूर्ण रूपमा पालना गर्न लगाउँछन् । ती आदेशहरू : चोरी नगर्नु, जीवहत्या नगर्नु, असत्य नबोल्नु, खराब आचरण नगर्नु, मादक पदार्थ सेवन नगर्नु, वर्जित समयमा भोजन

नगर्नु, शृङ्गारका वस्तु प्रयोग नगर्नु, सुन, चाँदी जस्ता बहुमूल्य वस्तु दान नलिनु, आफूखुसी दिएका वस्तुबाहेक अन्य वस्तुको लोभ नगर्नु वा ग्रहण नगर्नु, नृत्य, सङ्गीत जस्ता कुराहरूको नजिक नजानु आदि हुन् । यी आदेशहरूको पालना गर्ने र बीस वर्ष पुगेको व्यक्तिका लागि उपसम्पदा समारोह (The final ordination) गरिन्छ । त्यसपछि ज्ञान आर्जन गरेको बालक आफ्नो इच्छाअनुसार शिक्षालयबाट भिक्षु जीवनमा या गृहस्थाश्रममा प्रवेश गर्न स्वतन्त्र हुन्छ । यी दुईमध्ये उसले एकलाई अपनाउनुपर्ने हुन्छ ।

**(v) शिक्षकको भूमिका (Role of the Teacher)**

बौद्ध शिक्षा दर्शनमा छुट्टै शिक्षकको व्यवस्था गरिएको छैन । भिक्षु वा भिक्षुणीको जीवनमा प्रवेश गरेको बौद्ध धर्मप्रचारक व्यक्ति नै शिक्षक हुन्छ । यस्ता शिक्षकहरूले बौद्ध विहार, गुम्बा वा अन्य सङ्गठित संस्थाहरूमा शिक्षार्थीलाई बौद्ध दर्शनसम्बन्धी शिक्षा प्रदान गर्दछन् । आचार्य र उपाध्याय गरी यस शिक्षा पद्धतिबाट दुई किसिमका उपाधिहरू प्राप्त गर्न सकिन्छन् । आचार्य बन्नका लागि ६ वर्षको शिक्षा र उपाध्यायका लागि विशेष शिक्षा ग्रहण गर्नुपर्दछ । शिक्षक आफ्नो बुद्धि विवेकले भ्याएसम्म विद्यार्थीहरूलाई मानसिक, चारित्रिक र आध्यात्मिक विकासका लागि प्रयत्न गर्दछन् । उसले अष्टमार्गको अनुसरण गराउन विशेष रूपले सजगता अपनाउँछन् । शिक्षकले विद्यार्थीका लागि भोजन, बस्न, स्वास्थ्य, उपचार, व्यायाम, खेल आदिलाई पनि ध्यान दिनुपर्ने हुन्छ । शिक्षक आफूले अनुशासनमा रही नैतिकवान्, कर्तव्यनिष्ठ आदर्शवान् र अनुकरणीय व्यक्तिका रूपमा प्रस्तुत हुनुपर्दछ ।

**८. जयपृथ्वी बहादुर सिंह**

वि.सं. १९३४/५ /७ गते बझाङ्ग जिल्लाको चैनपुरमा जन्मिएका जयपृथ्वीबहादुर सिंहले बझाङ्गी राजाको उपाधि हासिल गरेका थिए । उनी गोरखापत्रका संस्थापक प्रधान सम्पादक,सत्यवादी पाठशाला नक्सालका संस्थापक,भारतका लागि नेपाली राजदूत, भारदारी अड्डा प्रमुख (प्रधानन्यायाधीश), मानार्थ कर्नेल (बेलायतबाट), विश्व मानवतावादी संघको संस्थापक अध्यक्ष, लेखक तथा मानवतावादी दार्शनिकको रुपमा चिनिन्छन् । उनले शान्ति र सहअस्थित्वका लागि सन् १९०८ देखि सन् १९३९ सम्म विश्व भ्रमण गरेका थिए । उनको मृत्यु वि.सं. १९९७ /६/१ म जयभवन, बैंगलोर भारतमा भएको थियो ।

मानवतावादका प्रतिपादक एवम् नेपालमा आधुनिक शिक्षाका संस्थापक जयपृथ्वीबहादुर सिंहको नागरिक चेतनाका तत्कालीन प्रकाशित कृतिको भावना बुझेर समकालीन अवस्था अनुसार शिक्षा प्रणली लागू गर्ने हो र नागरिक शिक्षाको अभियान चलाउने हो

भने राष्ट्रलाई धेरै ठूलो लाभ मिल्ने देखिन्छ । मानवजीवनको प्रमुख लक्ष्य जीवन संरक्षण हो । जीवन संरक्षणको सिद्धान्त मानवतावाद हो । मानवतावाद पराधीनता र दास मानसिकताबाट मुक्त छ यसले सहअस्थित्वमा विश्वास गर्छ । वस्तु विवेक र तर्कमा आधारित सभ्यता र संस्कृतिको मान्यता राख्छ । मानवीय मूल्यलाई नागरिकको व्यवहार सर्त मान्नुपर्छ । यसले सचेत र असल नागरिक हुन सघाउँछ ।

देवशमशेरले नेपालको शिक्षामा गरेका उल्लेखनीय कार्य गराउन जयपृथ्वीबहादुर सिंहको विशेष भूमिका रहेको थियो । बझाङ्गी राजा जयपृथ्वीबहादुर सिंहले देवशम्शेरका पालामा नेपाली विद्यार्थीहरुलाई नेपाली भाषामा शिक्षा दिने उद्देश्यले वि.सं. १९५८ मा "अक्षराङ्क शिक्षा" भन्ने पुस्तक प्रकाशित गरे । यस पुस्तकले आधारभूतरुपमा नेपाली भाषा लेख्दा प्रचलनमा आउने अक्षर र अङ्कको परिचय र अभ्यास गराउने लक्ष्य राखेको एउटा चौवालीस पृष्ठको किताब हो ।

उनले शिक्षकको सक्रिय भूमिकालाई विशेष जोड दिएका छन् भने शिक्षकलाई बुद्धिमान, चरित्तवान,असल सद्विवेकी हुनुपर्ने कुरा उल्लेख गरेका छन् । त्यसैगरी विद्यार्थी पनि लगनशील, इमान्दार, विवेकी, सिर्जनात्मक, हुनुपर्ने कुरा उल्लेख गरेका छन् ।

## ३. महत्वपूर्ण प्रश्नहरु

१. रुसोको शिक्षाको प्राकृतिक अवधारणाबारे व्याख्या गर्नुहोस् ।

२. रुसाको प्रकृतिवादबारे गरेका शैक्षिक देनहरू सम्बन्धमा वर्णन गर्नुहोस् ।

३. "अन्तिम सत्य विचार हो" भन्ने भनाइ कसको हो ? पुष्टि गर्नुहोस् ।

४. दार्शनिक प्लेटोको परिचय दिंदै शिक्षामा उनको योगदानबारे व्याख्या गर्नुहोस् ।

५. "मन्टेसोरी शिक्षण प्रणाली प्रभावकारी शिक्षणविधि हो ।" मारिया मन्टेसोरीको योगदानको चर्चा गर्दै यस भनाइलाई पुष्टि गर्नुहोस् ।

६. शिक्षाबारे महात्मा गान्धीको योगदानको चर्चा गर्नुहोस् ।

७. ईश्वर सृष्टिको आदि, अन्त्य, परम सत्य र अन्तिम प्राप्ति हो ।" यस भनाइलाई अरस्तुको दार्शनिक मान्यताका आधारमा पुष्टि गर्नुहोस् ।

८. शिक्षा क्षेत्रमा गौतम बुद्धको योगदानको चर्चा गर्नुहोस् ।

९. जोन डिवेले शिक्षा क्षेत्रमा पुऱ्याएको योगदान माथि प्रकाश पार्नुहोस् ।

१०. "विद्यार्थीलाई ज्ञानेन्द्रियको प्रयोग गर्ने अवसर दिई इन्द्रियहरूको प्रशिक्षण गर्नुपर्दछ ।" मन्टेसोरीको यस भनाइलाई पुष्टि गर्नुहोस् ।

११. शिक्षामा महात्मा गान्धीको योगदानको समीक्षा गर्नुहोस् ।

१२. गान्धीको जीवनी लेख्दै बुनियादी शिक्षा पद्धतिको पाठ्यक्रमको विवेचना गर्नुहोस् ।

१३. किन्डरगार्टेन पद्धति भनेको के हो ? यसका प्रमुख विशेषताहरू उल्लेख गर्नुहोस् ।

१४. नेपालको शिक्षा विकासमा जयपृथ्वी बहादुर सिंहको योगदान चर्चा गर्नुहोस् ।

## ४. उत्तर संकेत तथा विशेष सल्लाह

१. रुसोले प्रस्तुत गरेका "विद्यालयका पर्खालहरु भत्काऊ" भन्ने तथ्यको प्रशङ्ग उल्लेख गर्दै उनले शिक्षासम्बन्धी दिएका प्राकृतिक अवधारणाहरु उल्लेख गर्ने ।

२. हरेक प्रश्नहरुको उत्तरका लागि पाठसारमा दिइएका सम्बन्धित पाठ्यांश पढी उत्तरको मुख्य बूँदाहरु टिप्दै आफ्नै शब्दशैलीमा वर्णन गर्नुहोस् ।

## एकाइ : छ
# शिक्षाका आधुनिक प्रवृत्तिहरू
(Modern Trends/Approaches in Education)

## १. एकाई परिचय

यस एकाइमा शिक्षामा आधुनिक धारण तथा सामाजिक न्यायका वारेमा उल्लेख गरिएको छ । पाठ्यक्रमले यस एकाइलाई १० पाठ्यभार तोकेको छ । यस एकाइका मूख्य विषयवस्तुहरूको सार तथा वार्षिक परीक्षाको तयारीका अभ्यासका लागि प्रश्नहरू तथा तिनीहरूको उत्तरको वारेमा सहजीकरण गर्ने प्रयास समेत गरिएको छ । यस एकाइका विषयवस्तुहरूलाई निम्नानुसारका शिर्षक तथा उपशिर्षकमा पाठक्रममा दिइएकै ढाँचामा उल्लेख गरिएको छ ।

२.१ **शिक्षामा आधुनिक प्रवृत्ति** ( Mordern Trends in Education)
- १. **जीवनपर्यन्त शिक्षा** (Life Long Education)
  - (क) **औपचारिक शिक्षा** **(Formal Education)**
  - (ख) **अनौपचारिक शिक्षा** (Non-Formal Education : NFE)
  - (ग) **अनियमित वा आकस्मिक शिक्षा** **(Informal or Incidental Education)**
- २. **खुला सिकाइ** (Open Learning)
  - (क) **पत्राचार शिक्षा** (Correspondence)
  - (ख) **स्व-अध्ययन** (Self Study)
  - (ग) **दूर शिक्षा प्रक्रिया** (Distance Education Mode)
- ३. **शिक्षामा सूचना र सञ्चार प्रविधि** (ICT - Information Communication Technology in Edication)

२.२ शिक्षामा सामाजिक न्याय **(Social Justice in Education)**
- १. सवैका लागि शिक्षा **(Education for all)**
- २. समाहित शिक्षा **(Inclusive Education)**
- ३. बालअधिकार **(Child right)**

## २. एकाइको मूलभूत सार

### २.१ शिक्षामा आधुनिक प्रवृत्ति ( Mordern Trends in Education)

#### परिचय

मानव-विकासको इतिहाससँगसँगै शिक्षा विकासको इतिहासको पनि सुरुआत भएको हो । तर पनि शिक्षामा आधुनिक चिन्तन/प्रवृत्तिका उपायहरूको खोजको थालनी भने सन् १९६० को दशकपछि मात्र भएको मानिन्छ । मानिसले क्रमशः ढुङ्गे युग, प्राचीन युग, मध्यकालीन युग हुँदै आजको वैज्ञानिक युगमा प्रवेश गरेको छ । ती विभिन्न युगहरूमा मानिसलाई कुनै न कुनै रूपमा समाजमा समायोजित हुन सक्ने किसिमको शिक्षा व्यवस्था भएको पाइन्छ । शिक्षामा वैकल्पिक उपायहरूको खोजी गरिन थालियो । यीनै उपायहरूलाई शिक्षामा आधुनिक चिन्तन/प्रवृत्ति भनिन्छ ।
शिक्षामा आधुनिक चिन्तन वा प्रवृत्तिका अवधारणालाई निम्नाअनुसार प्रस्तुत गर्न सकिन्छ :

(१) शिक्षा सबैका लागि तथा सवैको पहुँचमा हुनुपर्छ ।
(२) शिक्षालाई कुनै वर्गको एकाधिकार हुने गरी सङ्कीर्ण नबनाई सबैको पहुँचयोग्य वनाउनु पर्दछ ।
(३) परम्परागत शिक्षाले वर्तमान अवस्थामा जनइच्छा, आवस्यकता तथा बढ्दो मागहरूलाई पूरा गर्न सकेको छैन ।
(४) वैज्ञानिक तथा सुचना प्रविधिको विकाससँगै शिक्षाका विकासलाई पनि समयसापेक्ष अघि बढाउन अत्यन्त जरुरी भएको छ ।
(५) शिक्षाले निरक्षरतालाई हटाई गरिबी निवारणलाई सहयोग गन सक्नु पर्दछ ।
(६) शिक्षाले देश र प्रत्येक व्यक्तिको सर्वाङ्गीण विकास गर्ने पूर्वाधार तयार पार्न सक्नु पर्दछ ।
(७) औपचारिक शिक्षाका साथै परम्परागत संघसस्थाहरूले पनि अनौपचारिक शिक्षा दिने वातावरण सिर्जना गर्नुपर्छ ।
(८) शिक्षामा व्यापक सुधार ल्याउन समयअनुसार नयाँ चिन्तनहरूको प्रारम्भ गरिनुपर्छ ।
(९) चलिरहेको वर्तमान शैक्षिक संरचना, शिक्षणविधि, पाठ्यक्रम, उद्देश्य आदिमा आन्तरिक सुधार गरी सम्पूर्ण सामाजिक नीतिलाई परिवर्तन गर्नुपर्छ ।
(१०) शिक्षाले न्यायिकता तथा निष्पक्षता प्रदान गर्नुपर्दछ ।

पाठ्यक्रमले तोकेवमोजिमका शिक्षाका आधुनिक चिन्तन वा प्रविधिहरूमा जीवन पर्यनत शिक्षा, खुला सिकाइ तथा ICT रहेका छन् । यी प्रत्येकलाई तल उल्लेख गरिएको छ ।

## १. **जीवनपर्यन्त शिक्षा** (Life Long Education)

जीवनपर्यन्त शिक्षा धारणात्मक रुपमा प्लेटोका पाला देखि नै विचार आएको पाइन्छ । सर्वप्रथम जीवनपर्यन्त शिक्षाको धारणा शुरु गराउने व्यक्ति फ्रान्सका व्याचेलर्ड (Bachelord) हुन् । उनले Learning is never old भनेका छन् । शिक्षाको धारणालाई आधुनिक समयमा अध्ययन र कामसंग सम्वन्धित गराएर हेरिन्छ । जीवनपर्यन्त शिक्षालाई हरेक मानिसको जीवन पद्दती जत्तिकै व्यापक र विस्तृत रुपमा हेर्ने गरिन्थ्योव्दको प्रयोगशिक्षा भनेको ज्ञान, सीप, अनुभव प्राप्त गर्ने जीवनपर्यन्त गतिशील र नियमित प्रक्रिया हो । सङ्कुचित धारणाअनुसार शिक्षालाई लेख्ने र पढ्ने प्रक्रियासँग मात्र सम्बन्धित गराइन्थ्यो । आधुनिक धारणाअनुसार शिक्षा भनेको सवैलाई पहुँच हुने गरी जीवनोपयोगी ज्ञान, सीप, दक्षता, अनुभव आदि प्राप्त गर्ने प्रक्रिया हो । व्यवहारमा परिवर्तन आउनु भनेको सिकाइ हो र सिकाइ नै शिक्षा हो । अतः मानव-जीवनमा अनुभव सगाल्दैं जे-जति सिकिन्छ वा व्यवहारमा सकारात्मक परिवर्तन आउँछ, त्यो सबै शिक्षा हो । जीवनपर्यन्त शिक्षालाई निरन्तरता दिनका लागि खुला सिकाइ, खुला विद्यालय, रेडियो शिक्षा, दूर शिक्षा, पत्राचार शिक्षा, तालिम, गोष्ठी, सेमिनार, प्रशिक्षण, छलफल आदि क्रियाकलापहरूलाई माध्यमका रुपमा लिएर शिक्षा सञ्चालन गरिन्छन् । त्यस्तै व्यक्तिले रेडियो, टि.भी., पत्रपत्रिका, सिनेमा, विभिन्न व्यक्तिहरूको प्रवचन, विभिन्न व्यक्तिहरूसँगको सम्पर्क, भेटघाट, काम गर्दा, कुरा गर्दा, दैनिक व्यवहार वा क्रियाकलाप गर्दा पनि विभिन्न किसिमका ज्ञान, सीप र अनुभव हासिल गर्दछ । Dumvile काअनुसार **शिक्षा कोक्रोबाट सुरु हुन्छ र चिहानमा गएर समाप्त हुन्छ ।**

**तसर्थ** शिक्षाका लागि चाहिने आवश्यक ज्ञान, सीप, अनुभवहरू औपचारिक शिक्षा, अनौपचारिक शिक्षा, अनियमित वा आकस्मिक आदि माध्यमबाट प्राप्त गरी जीवनभरी नै शिक्षा आर्जन गर्ने प्रक्रियालाई गर्नुलाई **जीवनपर्यन्त शिक्षा भनिन्छ ।**

**जीवनपर्यन्त शिक्षा प्राप्त गर्ने विभिन्न तरिकाहरू छन् । तल औपचारिक शिक्षा, अनौपचारिक शिक्षा तथा अनियमित वा आकस्मिक शिक्षालाई उल्लेख गरिएको छ ।**

(क) **औपचारिक शिक्षा** (Formal Education)
(ख) **अनौपचारिक शिक्षा** (Non-Formal Education)
(ग) **अनियमित वा आकस्मिक शिक्षा** (Informal or Accidental Education)

## (क) औपचारिक शिक्षा (Formal Education)

### परिचय

**यस औपचारिक शिक्षालाई छनोट गरिएको शिक्षा, अड्कलेर दिइने शिक्षा** (Piece-meal Education) **वा बाँधिएको शिक्षा** (Bounded Education) **पनि भन्ने गरिन्छ । पूर्वनिर्धारित निर्धारित उद्देश्य, पाठ्यक्रम र प्रक्रियाका आधारमा सञ्चालन गरिने शिक्षालाई औपचारिक शिक्षा भनिन्छ । औपचारिक शिक्षाका लागि बालबालिकाहरूको उमेर, समय, स्थान, नीति नियम, सर्त र शिक्षा लिनेदिने व्यक्ति आदि पनि निश्चित हुन्छन् । प्रायश: विद्यालय, महाविद्यालय र विश्वविद्यालयद्वारा दिइने शिक्षा औपचारिक शिक्षा हो । हालसम्म औपचारिक शिक्षा नै पनि बढी चलनचल्तीमा रहेको देखिन्छ । यो शिक्षा प्राप्त गर्नका लागि विद्यार्थीहरूले निश्चित नियम वा सर्तहरूको पालना गर्नुपर्दछ । निश्चित समयको कोर्स पूरा भइसकेपछि मूल्याङ्कनका विभिन्न साधनहरूको प्रयोग गरी उपलब्धिस्तरको लेखाजोखा गरिन्छ । प्रत्येक विषयको निश्चित पूर्णाङ्क र उत्तीर्णाङ्क तोकिएको हुन्छ । उत्तीर्णाङ्क वा सो भन्दा बढी अङ्क प्राप्त गर्ने विद्यार्थी उपल्लो कक्षा वा तहमा प्रवेश पाउँछ भने सो भन्दा कम प्राप्ताङ्क ल्याउने विद्यार्थीले पुन: त्यही कक्षा दोहोर्‍याउनुपर्ने हुन्छ । यसरी एक तहबाट अर्को तहमा जान पाइने पद्धति औपचारिक शिक्षामा अपनाइएको हुन्छ ।**

### औपचारिक शिक्षाका कमीकमजोरीहरू (Weaknesses of Formal Education)

जनता र राष्ट्रको सर्वाङ्गीण विकासका लागि यो शिक्षा अपरिहार्य हुन्छ । औपचारिक शिक्षा जताततै प्रचलनमा रहेको र ज्ञान-विज्ञानको स्थानान्तरण गर्न, दक्ष जनशक्ति तयार गर्न एकदमै उपयोगी शिक्षा पद्धति हो । त्यसैले हरेक राष्ट्रले यस्तो शिक्षाको व्यवस्था गर्न पर्याप्त लगानी गर्ने गरेका छन् । तर पनि यस शिक्षामा कतिपय कमी-कमजोरी रहेका छन् । त्यसैले यसमा विभिन्न सुधारहरूको आवश्यकतालाई विभिन्न शिक्षाशास्त्रीहरूलेसमेत औपचारिक शिक्षाको आलोचना गर्दै यसका कमजोरीहरू औल्याएका छन् । औपचारिक शिक्षाका प्रमूख कमजोरीहरूलाई तल बुदाँगत रुपमा उल्लेख गरिएको छ ।

#### १. खर्चिलो पद्धति (Expensive System)

औपचारिक शिक्षाको व्यवस्थापन, सञ्चालन तथा पहुँचका लागि धेरै रकम खर्च गर्नुपर्ने हुन्छ । विद्यालय भवन, फर्निचर, पुस्तकालय, अन्य शैक्षिक सामग्री खरिद, शिक्षक- कर्मचारीका लागि तलब, भत्ता आदिमा नियमित रुपमा प्रशस्त रकम खर्च गर्नुपर्ने हुन्छ । यसले सबै ठाउँमा आवश्यकतानुसार शैक्षिक संस्थाहरू खोल्न कठिन हुन्छ । नेपालजस्तो विकासोन्मुख देशमा

झन् कठिन रहेको छ । जनसङ्ख्या वृद्धि सँगसँगै विद्यालय, क्याम्पस तथा विश्वविद्यालय खोल्न कठिन भइरहेको छ ।

## २. बाँधिएको शिक्षा पद्धति (Bounded Education System)

औपचारिक शिक्षा बाँधिएको शिक्षा पद्धति हो किनकी यसलाई शिक्षण संस्थाहरूको साँघुरो घेराभित्र, सीमित पाठ्यक्रम र पाठ्यपुस्तकभित्र र शिक्षकहरूको ज्ञानमा मात्र सीमित गरिएको हुन्छ । साथीसङ्गत, छरछिमेकी, सङ्घ-संस्था र अन्य वातावरणबाट पनि व्यक्तिले शिक्षा लिइरहेका हुन्छन् । त्यसैले शिक्षालाई अनौपचारिक किसिमबाट पनि अगाडि बढाउनुपर्छ भन्ने मान्यता शिक्षाको आधुकि प्रवृत्तिले लिएको छ ।

## ३. सहरमुखी शिक्षा पद्धति (Urban Oriented Education System)

औपचारिक शिक्षाका शैक्षिक संस्थाहरू प्राय: ग्रामीण र दुर्गम ठाउँहरूमा भन्दा सहर-बजारमा रहेका हुन्छन् । विद्यार्थी चाँप पनि सहरकेन्द्रित नै हुन्छ । त्यसैले शिक्षित जनशक्ति पनि सहरकेन्द्रित नै हुन जान्छ । यस प्रक्रियाले ग्रामीण र दुर्गम स्थानहरू जहिले पनि पछि नै पर्न जान्छन् । प्रायश: सहर-बजार प्रवेश गरेको विद्यार्थी र शिक्षित जनशक्ति गाउँ फर्कन चाहँदैन । यसले गर्दा सहरी बेरोजगारीको समस्या पनि देखा पर्छ ।

## ४. सम्भ्रान्त शैक्षिक पद्धति (Elit Education System)

औपचारिक शिक्षा गरिब, पिछडिएका तथा व्यस्त वर्गको पहुँचभन्दा टाढै हुन्छ । लामो समयसम्म निरन्तर रुपमा लगानी गर्नुपर्ने भएकाले सवै वर्गले रकम खर्च सक्दैनन् । त्यसैले धनी

## ५. कठोर वा स्थिर शैक्षिक प्रणाली (Rigid or Static Education System)

सिकाइ वा ज्ञान भनेको परिवर्तनशील र गतिशील प्रक्रिया हो । औपचारिक शिक्षा व्यवस्था तुलनात्मक रुपमा ज्यादै नै कठोर हुन्छ । त्यसैले यो शिक्षा लामो समयसम्म पनि स्थिर रहन सक्दछ । समय र ज्ञान परिवर्तनशील छ । तर पनि शिक्षानीति र कार्यक्रम, पाठ्यक्रम, पाठ्यपुस्तक आदिमा तुरुन्तै परिवर्तन गर्न कठिन नै हुन्छ । उदाहरणका रुपमा नेपालमा त्रि.वि. अन्तर्गतका विभिन्न पाठ्यक्रमहरू झन्डै १५ देखि २० वर्षसम्म पनि परिमार्नन भएका थिएनन् ।

६. **सिर्जनात्मकताको कमी (Lack of Creativeness)**

औपचारिक शिक्षामा सिकाइलाई पाठ्यक्रम, शिक्षण सिकाइ-क्रियाकलाप, नीति-नियम, औपचारिक सर्त आदि कुराहरूले सीमित बनाएको हुन्छ । तुलनात्मक रुपमा स्वतन्त्र रूपले सिर्जनात्मक क्षमताको विकास गर्ने अवसरको कमी हुन्छ । औपचारिकताको परिधिभित्र रहेर विद्यार्थीले शिक्षा हासिल गर्नुपर्ने हुन्छ ।

७. **साधारण शैक्षिक पद्धति (General Educational System)**

औपचारिक शिक्षाले प्रायश: जसो साधारण जनशक्तिको उत्पादन गर्दछ । यस्तो जनशक्ति शैक्षिक बेरोजगारमा परिणत हुन्छ । त्यसैले औपचारिक शिक्षाले साधारण शैक्षिक पद्धतिलाई अँगालेको हुन्छ भनी आलोचित हुदैं आएको पाईन्छ ।

८. **शिक्षाको ब्याङ्किङ् प्रणाली (Banking System of Education)**

जसरी ब्याङ्कमा रहेको बचत ग्राहकलाई दिइन्छ । त्यसरी नै औपचारिक शिक्षामा शिक्षकले आफूसँग भएको ज्ञानलाई विद्यार्थी समक्ष हस्तान्तरण गर्ने काम गर्दछ । यस कार्यले ज्ञानलाई सीमित गर्दछ । तर शिक्षाले विद्यार्थीको अन्तर्निहित प्रतिभालाई प्रस्फूटन गरी सर्जनशील बनाउन सक्नु पर्दर्छ । त्यसैले शिक्षाविद्हरूले औपचारिक शिक्षालाई ब्याङ्किङ प्रणालीसँग तुलना गरेका छन् ।

९. **अड्कलेर दिइने शिक्षा (Piece-meal Education)**

यो अपार संसारमा ज्ञान असिमित रुपमा रहेको छ । त्यसै गरी दर्शनको क्षेत्र र दृष्टिकोण पनि व्यापक छ । यी सवै ज्ञानलाई कक्षा शिक्षणको सीमित समय र व्यवस्थापन भित्र प्राप्त गर्न सम्भव पनि हुँदैन । त्यसैले हरेक शिक्षण संस्था तथा शिक्षकहरूले हरेक तह, विषय तथा पाठमा कति सिकाउने, के-के दिने, के-के भन्ने, जस्ता कुराहरूको खाका बनाएको हुन्छ । यसरी औपचारिक शिक्षामा अड्कलेर विषयवस्तुको प्रस्तुतीकरण गरिएको मानिन्छ । सबै कुराहरूलाई तोकिएको समयमा प्राप्त गर्न असम्भव प्राय नै हुन्छ । यसरी केही आवश्यक र पूर्व निर्धारित विषयवस्तुलाई मात्र दिइने हुनाले यसलाई शिक्षाविद्हरूले अड्कलेर दिइने शिक्षा भनी औपचारिक शिक्षाको कमजोरी औंल्याएका छन् ।

## (ख) अनौपचारिक शिक्षा (Non-Formal Education : NFE)

यो समसामयिक शिक्षा हो । कुनै विषयवस्तुसीप आदि सम्वन्धमा बढि कार्यदक्षता प्राप्त गराउने सभा, सम्मेलन, गोष्ठी, छोटो अवधिको त विद्यालय वा औपचारिक शिक्षा पद्धतिभन्दा बाहिरको शिक्षालाई अनौपचारिक शिक्षा भनिन्छ । मानव-सभ्यताको सुरुआतसँगसँगै औपचारिक शिक्षाको थालनी भएको पाइन्छ । तर अनौपचारिक शिक्षाको इतिहास धेरै पुरानो छ । प्राचीनकालदेखि नै आमाबाबुले छोराछोरीलाई आफ्नो पेसा, व्यवसाय, तालिम खादि पनि अनौपचारिक शिक्षाका उदाहरण हुन् । पहिले पहिले समाजका जान्ने बुझ्नेहरू तथा धार्मिक नेता, पुरोहित, ऋषि-मुनि आदिले समाजमा ज्ञानको प्रसार गर्ने कार्य गर्दै आए । तर अनौपचारिक शिक्षालाई व्यवस्थित गर्न, सङ्गठित गर्न, प्रभावकारी शैक्षिक कार्यक्रमकै रूपमा उभ्याउन भने निकै लामो समय लाग्यो ।
अनौपचारिक शिक्षाको आधुनिक अवधारणा निर्धारण गर्ने कार्यमा विभिन्न विद्वान्हरूको योगदान रहेको छ ।

- इभान इलिच र पाउलो फ्रेरेले अनौपचारिक शिक्षालाई औपचारिक शिक्षाको ठीक उल्टो हो भनेर परिभाषित गरेका छन् ("Non-formal education is antiformal education." - Ivan Illich and Paulo Freire)
- पी.एच कुम्वस तथा मन्सुर अहम्मदकाअनुसार औपचारिक रुपले संगठित शिक्षा प्रणली भन्दा वाहिर स१चालन गरिएको कुनै पनि सुव्यवस्थित शैक्षिक कार्यक्रमलाई अनौपचारिक शिक्षा भनिन्छ, जसले खासखाले सिकारु वर्गका सिकाइ आवस्यकता पुरा गर्ने ध्येय राखेको हुन्छ ।

माथिका परिभाषाहरूका आधारमा अनौपचारिक शिक्षा भन्नाले औपचारिक शिक्षण संस्थाहरू विद्यालय, विश्व विद्यालय आदि वाहेक निश्चित उद्देश्य प्राप्तीका लागि निर्माण गरिएको पाठ्यक्रमका आधारमा व्यवसथित ढङ्गबाट दिइने शिक्षा हो ।

## अनौपचारिक शिक्षाका उद्देश्यहरू (Purposes of Non-Formal Education)

औपचारिक शिक्षामा देखिएका कमीकमजोरी हटाई अपूर्ण ज्ञान-सीपलाई पूर्णता दिनु नै अनौपचारिक शिक्षा प्रमूख उद्देश्य हो । यसका प्रमुख उद्देश्यहरूलाई तल उल्लेख गर्न सकिनछ ।

१. जीवनपर्यन्त शिक्षाको अवधारणा तथा प्रवृत्तिलाई सार्थक बनाउनु ।
२. पेसागत र व्यावसायिक सीपको विकास गर्नु ।
३. सवै व्यक्तिहरूलाई जीवनोपयोगी शिक्षा प्रदान गर्नु ।
४. औपचारिक शिक्षाबाट वञ्चित बालबालिकाहरूलाई शिक्षाको अवसर दिनु ।
५. निरक्षरता हटाउन सहगोग गर्नु ।
६. आधुनिक मूल्य-मान्यता र जीवन-दर्शनको अनुभूति गराउनु ।
७. पिछडिएका वर्गलाई आत्मसम्मान र आत्मनिर्भरतातर्फ प्रेरित गर्नु ।

८. परिवार नियोजनसम्बन्धी जानकारी दिई प्रजनन दरलाई नियन्त्रण गरी जनसङ्ख्या वृद्धिमा रोकथाम गर्नु ।
९. कृषि उत्पादनमा नयाँ प्रविधि सहित अभिवृद्धि गर्नु ।
१०. रोजगारीका वैकल्पिक उपायहरूबारे जानकारी दिनु ।
११. साधारण हिसाबसम्बन्धी सीप सिकाउनु ।
१२. आफ्नो अधिकार र कर्तव्यको बोध गराउनु, जिम्मेवारी वहन गर्नु, प्रोत्साहित गर्नु, आयमूलक कार्यहरू गर्न प्रेरित गर्नु आदि ।
१३. स्वास्थ्य, शिक्षा, पोषण र शिशु स्याहारको शिक्षा दिनु ।
१४. बालअधिकार, महिलाअधिकार, मानवअधिकार, राजनीतिक अधिकारसम्बन्धी चेतना फैलाउनु ।
१५. उपेक्षित, उत्पीडित वर्गलाई राष्ट्रिय मूलधारमा समाहित गर्नु ।
१६. दैनिक जीवनमा उपयोगी हुने कुराहरू जस्तै- साधारण लेखाइ, पढाइ, प्राकृतिक साधन-स्रोतको सदुपयोग र संरक्षण गर्न सचेत गर्नु ।

## अनौपचारिक शिक्षाको आवश्यकता र महत्व

**(Need and Importance of Non- Formal Education)**

औपचारिक शिक्षाले मात्र मानवीय आवश्यकताको परिपूर्ति गर्न सक्दैन । शिक्षाको क्षेत्र एकदमै व्यापक भइसकेको छ । ज्ञानको क्षेत्र दिनप्रतिदिन बढ्दो छ ।नयाँ-नयाँ विधि र प्रविधिहरूको आगमन भइरहेको छ । सम्पूर्ण समाज, वर्ग, क्षेत्रलाई औपचारिक शिक्षाले समेट्न सकेको छैन । यसको आवश्यकता र महइभ्वलाई बुँदागत रूपमा निम्नअनुसार व्याख्या गर्न सकिन्छ :

### १. निरन्तर शिक्षा प्रदान गर्न (To Provide Continuous Education)

औपचारिक शिक्षाको समय, स्थान र पाठ्यक्रम निश्चित हुन्छ । त्यसैले यस्तो शिक्षामा निरन्तरता दिन गाह्रो हुन्छ । सम्बन्धित पेसा, व्यवसाय र कार्यमा दक्षता बढाउन, ज्ञान, सीप, अनुभवको पुनर्ताजगी गराउन, थप जानकारी र ज्ञानको विस्तार गरी शिक्षालाई निरन्तरता दिन अनौपचारिक शिक्षाको महइभ्वपूर्ण भूमिका रहन्छ । किनभने अनौपचारिक शिक्षा इच्छा, आवश्यकता, रुचि, चाहनाअनुसार दिइने शिक्षा हो ।

### २. गुणात्मक शिक्षा प्रदान गर्न (To Provide Quality Education)

औपचारिक शिक्षा सैद्धान्तिक र प्राज्ञिक किसिमको हुन्छ भने NFE कार्यमूलक, व्यावहारिक र समस्याकेन्द्रित हुन्छ । यो आवश्यकतामा आधारित हुन्छ । यसले विद्यमान समस्याको सामना

गर्न सक्ने क्षमता राख्दछ । यो नै गुणात्मक शिक्षा हो । त्यसकारण गुणात्मक शिक्षा दिन सक्नु अनौपचारिक शिक्षाको महत्वपूर्ण योगदान हो ।

३. **सिकाइलाई जीवन्त बनाउन (To Make Education Alive)**

अनौपचारिक शिक्षा सहभागितात्मक र समस्याकेन्द्रित हुन्छ । सिकारुको आवश्यकता, भोगाइ र अनुभवमा आधारित हुन्छ । यसले सैद्धान्तिक भन्दा पनि व्यावहारिक र जीवनोपयोगी कुराहरूलाई प्राथमिकता दिन्छ । सहभागीको सक्रियता र क्रियाकलापका आधारमा सिकाइ अगाडि बढाउने काम हुन्छ । अत: शिक्षालाई जीवन्त बनाउन पनि यसको आवश्यकता पर्दछ ।

४. **समकक्षी शिक्षा दिन (To Provide Equivalent Education)**

अनौपचारिक शिक्षालाई औपचारिक शिक्षाको समानान्तर वा समकक्षी बनाउने कुरामा शिक्षाविद्हरूले आफ्ना तर्कहरू प्रस्तुत गरेका छन् । जस्तै : अनौपचारिक शिक्षाबाट साक्षरताको शिक्षा लिएकालाई आधारभूत तह (कक्षा ३ सम्मको , साक्षरोत्तरलाई प्राथमिक तह, खुला सिकाइको माध्यमबाट माध्यमिक, उच्च माध्यमिक र उच्चशिक्षासरहको शिक्षा दिन सकिन्छ । त्यसैले पत्राचार शिक्षा, दूरशिक्षा र खुला विश्वविद्यालयको प्रचलन चलेको हो । यसर्थ NFE लाई औपचारिक शिक्षाको समानान्तर शिक्षा दिन पनि महत्वका रूपमा लिन सकिन्छ ।

५. **शिक्षामा पहुँच बढाउन (To increase Access in Education)**

समाजमा विभिन्न वर्गका बालबालिकाहरू हुन्छन् । आर्थिक, सामाजिक, धरातलीय विविधता र समस्या आदिका कारण कतिपयले विद्यालय शिक्षाबाट वञ्चित हुनुपरेको छ । त्यसैले सबै किसिमका बालबालिकाहरूलाई शिक्षाको पहुँचमा पुर्‍याउन पनि अनौपचारिक शिक्षाको आवश्यकता पर्दछ ।

६. **ज्ञान, सीप, क्षमतालाई अद्यावधिक गर्न (To update knowledge, skills andcapacities)**

सयम, परिस्थिति र कामको प्रकृतिअनुसार विभिन्न किसिमका ज्ञान, सीप, क्षमताहरूको आवश्यकता पर्दछ । कतिपय अवस्थामा यी कुराहरूमा अभिवृद्धि गर्नु पर्ने, यथार्थ जानकारी राख्नुपर्ने स्थिति आउँछ । त्यसैले समय-समयमा अद्यावधिक गराइ राख्न पनि NFE को आवश्यकता पर्दछ ।

### (ग) अनियमित वा आकस्मिक शिक्षा (Informal or Incidental Education)

अनियमित वा आकस्मिके शिक्षामा औपचारिक र अनौपचारिकमा जस्तो उद्देश्य, पाठ्यक्रम, समय, स्थान, सामग्री, शिक्षण सिकाइ विधि तथा पद्दति आदि पूर्वनिर्धारित हुँदैनन् । यो अकस्मात् जुनसुकै बेला जुनसुकै उमेरमा जहाँसुकै पनि प्राप्त हुन सक्छ । आँनै अनुभव, क्रियाकलाप तथा देखासिकी आदि तरिकाबाट आकस्मिक रूपमा ज्ञान, सीप, अभिवृत्तिहरू प्राप्त हुन सक्छन् । यसअन्तर्गत खेलको मैदानबाट, रेडियो, टि.भी., पत्रपत्रिका, चाडपर्व, धार्मिक प्रवचन, कसैको भाषण, साथीसंगतसँगको गफगाफ, कुराकानी वा कामगराइको दौरानमा अकस्मात् प्राप्त हुने ज्ञान पर्दछ । व्यक्तिले जीवन अवधिहरूमा प्रत्यक दिन र समयमा केही न केही नयाँ ज्ञान, सीप, अभिवृत्ति तथा अनुभव हासिल गरिरहेको हुन्छ । यो औपचारिक बन्धनबाट पूर्णरूपमा मुक्त हुन्छ । यसका साथै यो सिक्ने क्रम आजीवन अविच्छिन्न रूपमा चली नै रहन्छ । यसरी व्यक्तिले समाज, भौतिक तथा सामाजिक वातावरणबाट प्राप्त गर्न सकिने शिक्षा नै अनियमित शिक्षा हो ।

## २. खुला सिकाइ (Open Learning)

### (क) परिचय

औपचारिक शिक्षाको सीमित घेराभित्र नराखी सबैका लागि प्रवेश खुला र स्वतन्त्र रूपमा ज्ञान आर्जन गर्न पाउने शैक्षिक पद्धति नै खुला सिकाइ हो । यसमा प्रवेश पाउन कुनै निश्चित नीति, नियम, सर्त, योग्यता, उमेर, समय, स्थान आदिको बन्देज हुँदैन । औपचारिक शिक्षाबाट वञ्चित, विद्यालय छोड्न बाध्य भएका, औपचारिक शिक्षा पूरा गर्न नसकेका, कामको व्यस्तताले गर्दा औपचारिक रूपमा नियमित विद्यार्थीका रूपमा सिक्न असमर्थ, भौगोलिक विकटता, आर्थिक अभाव आदि कारणले गर्दा पिछडिएकाहरूलाई शिक्षाको मूलधारमा समाहित गर्ने उद्देश्यले खुला सिकाइको अवधारणा अगाडि आएको हो । यसमा पनि औपचारिक शिक्षासरह उपाधि प्राप्त गर्न सकिन्छ । आवश्यकता, चाहना र परिस्थितिअनुसार हरेक नागरिकले खुला सिकाइको माध्यमबाट सक्षमता हासिल गर्न सक्छ । औपचारिक शिक्षामा जस्तो यसमा कुनै किसिमको रोकटोक हुँदैन । यो शिक्षासम्बन्धी वैज्ञानिक चिन्तन एवम् आधुनिक अवधारणा हो । हाल विश्वका कैयौँ देशहरूमा खुला सिकाइको अवसरलाई धेरै नै व्यापक बनाउने कार्य भइरहेको छ । खुला सिकाइको अवसरलाई संस्थागत गर्न विश्वका कैयौँ देशहरूले खुला विश्वविद्यालय तथा अन्य शिक्षण संस्थाहरू स्थापना गरेका छन् ।

## (ख) खुला सिकाइका विशेषताहरू (Characteristics of Open Learning)

खुला सिकाइका मूख्य विशेषताहरूलाई तल बुँदागत रुपमा उल्लेख गरिएको छ ।

१. औपचारिक शिक्षामा जस्तो नियमित विद्यालय जानु नपर्ने भर्नाको समस्या बेहोर्नु नपर्ने र आवश्यक सर्तहरू पूरा गर्नु र्ने बाध्यता रहँदैन ।
२. यसले औपचारिक विद्यालयीय शिक्षाबाट वञ्चित गरिव, शैक्षिक रूपमा पीडित वा उपेक्षित तथा व्यस्त व्यक्तिहरूलाई समेत उपयुक्त अवसर दिन सक्छ ।
३. यसमा सिकारुको इच्छा, आकाङ्क्षा, क्षमता र आवश्यकतानुसार सिक्ने अवसर प्राप्त हुन्छ ।
४. यस शिक्षालाई औपचारिक शिक्षाको समानान्तर शिक्षाका रुपमा सञ्चालन गर्न सकिन्छ ।
५. यस्तो शिक्षामा शिक्षार्थी छनोटमा लचिलोपन अपनाइन्छ ।
६. यस्तो शिक्षामा काममा व्यस्त रहनेहरूले पनि सिकाइको अवसर प्राप्त गर्न सक्दछन् ।
७. यस्तो शिक्षामा आधुनिक सिकाइविधि, सुचना, सञ्चार तथा प्रविधिको प्रयोग गरिन्छ ।
८. यस्तो शिक्षामा शिक्षण विद्यार्थी केन्द्रित हुन्छ ।
९. यस्तो शिक्षामा घरमै बसी-बसी उच्चशिक्षा आर्जन गर्न सकिन्छ ।
१०. यस्तो शिक्षामा पनि प्रमाणपत्र दिने गरिन्छ ।
११. यस्तो शिक्षामा तुलनात्मक रुपमा ठूलो लगानी गर्नु पर्ने समस्या पनि रहँदैन ।
१२. यस्तो शिक्षामा हरेक क्षेत्रमा काम गर्ने दक्ष नागरिक तयार पार्न सकिन्छ ।

## (ग) खुला सिकाइ प्रक्रिया (Open Learning Process)

खुला सिकाइ-प्रक्रिया सञ्चालन गर्न विभिन्न किसिमका माध्यमहरू अपनाउन सकिन्छ । शिक्षाविद्हरूको भनाइ शिक्षा कार्यक्रममा निम्नलिखित माध्यमहरू प्रचलनमा रहेको देखिन्छ :

१. **पत्राचार शिक्षा** (Correspondence Course/Education)
२. **स्व-अध्ययन** (Self Study)
३. **दूरशिक्षा** (Distance Education)

### १. पत्राचार शिक्षा (Correspondence)

पत्राचार शिक्षाको सुरुआत स्वीडेनबाट भएको हो । सर्वप्रथम सन् १८८० मा स्वीडेनका Book Keeping का शिक्षक Hans Hermod ले यसको प्रारम्भ गरेका हुन् । त्यसपछि बेलायत, अमेरिका, अस्ट्रेलिया, भारतलगायत विभिन्न देशहरूले पनि यसलाई प्रचलनमा ल्याएको पाइन्छ । चिठ्ठी पत्रका माध्यमद्वारा सञ्चालन गरिने शिक्षा पद्धतिलाई पत्राचार शिक्षा भनिन्छ । विविध कारणद्वारा विद्यालय वा विश्वविद्यालयमा पूरा समय र लगानी गर्न नसकि औपचारिक शिक्षाबाट वञ्चितहरूका लागि यो एकदमै उपयोगी माध्यम मानिन्छ । यसमा भर्ना भएको शिक्षार्थीलाई चाहिने आवस्यक पाठ्यसामग्रीहरू हुलाक

तथा अन्य सञ्चार माध्यमद्वारा पत्राचार गरी पठाइन्छ । खुला सिकाइका लागि पत्राचार शिक्षालाई एक प्रभावकारी माध्यम मानिएको छ ।

यस शिक्षा प्रणालीमा विद्यालय, कक्षाकोठा तथा शिक्षकबिना नै शिक्षार्थीलाई स्वअध्ययन गर्नका लागि विषय विज्ञहरूद्वारा निर्मित पाठ्यसामग्रीहरू सिकारुको घरमा पठाइन्छ । सिकारुले आफ्नो फुर्सदको समयमा स्वअध्ययन गर्दछ । निश्चित समयपछि सम्वन्धित निकायहरुबाट तोकिएको केन्द्रमा शिक्षार्थीको मूल्याङ्न गरी प्रमाणपत्र प्रदान गरिन्छ । यसरी पत्राचार पद्धतिद्वारा विद्यालयिय तथा उच्चशिक्षा सवै प्राप्त गर्न सकिन्छ ।

### पत्राचार शिक्षाका विशेषताहरू (Characteristics of Correspondence Course)

पत्राचार शिक्षाका मूख्य विशेषताहरुलाई तल वुँदागत रुपमा प्रस्ट पार्न सकिन्छ ।

१. यसले शिक्षाको समान अवसर र जीवनपर्यन्त शिक्षाको अवधारणालाई अङ्गीकार गरेको छ ।
२. औपचारिक शिक्षाजस्तो खर्चिलो हुँदैन, साथै सो सरह मान्य हुने प्रमाणपत्र प्रदान गर्दछ ।
३. यस शिक्षामा पाठ्यांशका बारेमा अवगत गराउने प्रमुख माध्यम पत्राचार हो ।
   घर तथा कार्य क्षेत्रमै रहेर पनि सवै प्रकारका शिक्षा हासिल गर्न सकिन्छ ।
४. यस शिक्षामा व्यक्तिले आफ्नो क्षमता, योग्यता, रुचि र आवश्यकताअनुसार फुर्सदको समयमा अध्ययन गर्ने मौका पाउँदछन् ।
५. यस शिक्षामा उमेर, आवश्यक शैक्षिक योग्यताको बन्देज हुँदैन ।
६. शिक्षार्थीलाई कुनै समस्या पर्दा तोकिएको केन्द्रमा तोकिएको सहजकर्ता वा शिक्षकसँग सम्पर्क गरी समाधान खोज्न सकिन्छ ।
७. यस्तो शिक्षाको अवसर जुनसुकै कारणले पनि औपचारिक शिक्षाबाट वञ्चित भएकाहरूले पनि सजिलै प्राप्त गर्न सक्दछन् ।
८. यस्तो शिक्षामा औपचारिक शिक्षालयमा जस्तो कक्षाकोठालगायत अन्य भौतिक सामग्रीहरूको आवश्यकता पर्दैन ।

### २. स्व–अध्ययन (Self Study)

स्व अध्ययन पनि खुला सिकाइको एक माध्यम तथा अति नै उपयुक्त र प्रभावकारी पद्धति हो । विद्यार्थी स्वयम् आफैँले अध्ययन गरी शिक्षा प्राप्त गर्ने तथा विद्यार्थी स्वयम् सक्रिय भई चाहिने पाठ्यसामग्रीको सङ्कलन गरेर फुर्सदको समयमा अध्ययन गर्ने खुला सिकाइको एक माध्यमलाई स्व अध्ययन भनिन्छ । स्व अध्ययनमा विद्यार्थीले आफ्नो योग्यता, क्षमता, रुचि र आवश्यकताअनुसार विषय छनोट गरी आफैँले अध्ययन गरेर ज्ञान, सीप हासिल गर्न सक्छ । अन्त्यमा तोकिएको पाठ्यक्रमअनुसार उसको परीक्षा लिइन्छ र उत्तीर्ण भएमा प्रमाणपत्र दिइन्छ । औपचारिक शिक्षण संस्थाहरूले पनि नियमित कक्षामा भर्ना नभएका प्राइभेट विद्यार्थीहरूका लागि एउटा परीक्षा फारम भराएर परीक्षा दिन पाउने

व्यवस्था मिलाएको पाइन्छ । त्यसैले स्वअध्ययन औपचारिक र अनौपचारिक दुवै किसिमको हुन सक्छ । साथैं स्वअध्ययनलाई पनि एउटा उपयोगी शिक्षा पद्धतिका रूपमा लिन सकिन्छ ।
नेपालमा एस्.एल्.सी. र क्याम्पस तहको शिक्षा हासिल गर्न प्राइभेट प्रशिक्षार्थीका लागि यो व्यवस्था सञ्चालित छ । त्यसै गरी हाल शैक्षिक जनशक्ति विकास केन्द्र मार्फत माध्यमिक तह तथा अनौपचारिक शिक्षा केन्द्रद्वारा निम्न माध्यमिक तहको सव अध्ययन सामग्रहरु विकास गरिएको पाइन्छ । स्वअध्ययन पद्धतिमा कुनै समस्या देखा पर्दा विद्यार्थीले समवन्धित विषय-विशेषज्ञ, शिक्षक, प्राध्यापक, साथीभाइ वा अन्य कुनै जानकार व्यक्तिको सहयोग लिन सक्छ । यसले व्यक्तिलाई मिहिनेती, जुझारु, आत्मविश्वास, स्वावलम्बी, तार्किक र अनुसन्धानमा समक्ष बनाइ दिन्छ । सिकारु आफैं सोच्ने, कल्पना गर्ने, चिन्तनमनन गर्ने, तर्क गर्ने र उचित निर्णय लिन सक्ने हुन्छ ।

## ३. दूर शिक्षा प्रक्रिया (Distance Education Mode)

दूर शिक्षा भन्नाले टाढैबाट दिइने शिक्षा वुझिन्छ । यो शिक्षा पनि खुला सिकाइको अवधारणाबाट प्रेरित भएको हो । भौगोलिक विकटता वा दुर्गम ठाउँसम्म छरिएर रहेका छन् । त्यस्तै अन्य विभिन्न कारणले गर्दा औपचारिक रूपमा शिक्षालयमा जान सक्दैनन् । दिनभर आफ्नो काममा व्यस्त रहनुपर्ने बाध्यता रहन्छ । यस पद्धतिमा शिक्षार्थी भौतिक रूपले टाढा-टाढासम्म छरिएर रहेका हुन्छन् । त्यस्ता सिकारुहरूका लागि रेडियो, टेलिभिजन, टेलिफोन, इमेल, इन्टरनेट, ‍ियाक्स, डिसी आदि सञ्चारका आधुनिक साधनहरूको माध्यमद्वारा ज्ञान, सीपको प्रसारण गरिन्छ । यसमा पनि निश्चित पाठ्यक्रमका आधारमा विभिन्न विषयका विभिन्न पाठहरूलाई योजनाबद्ध गरी शिक्षकले एकतर्फी ढङ्गबाट सक्रिय भई प्रसारण गरिएको हुन्छ । सिकारुले फुर्सदको समयको सदुपयोग गर्दै शिक्षा ग्रहण गर्दछ । यी साधनहरूमध्ये रेडियोलाई सबैभन्दा सजिलो र सर्वसुलभ मान्न सकिन्छ । किनभने रेडियो सर्वसाधारणले पनि राख्न र प्रयोग गर्न सक्दछन् । यो कम खर्चिलो पनि हुन्छ र एकैपटक हजारौं श्रोताहरूले सुन्न सक्दछन् । नेपालमा सन् १९८० देखि प्राथमिक सेवाकालीन शिक्षकलाई आवश्यक ज्ञान, सीप, क्षमता अभिवृद्धि गर्नका लागि “रेडियो शिक्षा शिक्षक तालिम” कार्यक्रम सञ्चालन हुँदै आएको छ । यसका अतिरिक्त कृषि कार्यक्रम, ब्याङ्किङ शिक्षा, कानुनी सल्लाह, स्वास्थ्य र सरसफाइ, मानवअधिकार, बालअधिकार र शैक्षिकलगायत विभिन्न चेतनाहरू जगाउनका लागि रेडियो प्रयोग गरिन्छ । B.B.C. बाट पनि यस्ता विभिन्न शैक्षिक कार्यक्रमहरू सञ्चालन हुँदै आइरहेका छन् । यसरी दूर शिक्षा प्रक्रियाले सबैका लागि शिक्षा, शिक्षामा समान अवसर र जीवनपर्यन्त शिक्षामा महत्वपूर्ण भूमिका खेलेको पाइन्छ ।

थोरै लगानीमा, छोटो समयमा एकैपटक प्रशस्त सिकारुहरूलाई शिक्षा प्रदान गर्न यो एक प्रभावकारी माध्यम बनेको छ । यसलाई पनि औपचारिक र अनौपचारिक दुवै किसिमको शिक्षामा प्रयोग गर्न सकिन्छ । अडियो-भिडियो क्यासेटबाट पनि दूर शिक्षा सञ्चालन गर्न सकिन्छ । यसलाई एकतर्फी प्रक्रिया भनिए तापनि यसलाई दोहोरो सक्रियतामा आधारित प्रक्रियाका रूपमा सञ्चालन

गर्न सकिन्छ । चीनले टेलिभिजन विश्वविद्यालयको स्थापना नै गरिसकेको छ । यसमा टेलिभिजनबाट शिक्षण गर्दछ र विद्यार्थीहरूले घरमै बसी सिक्ने अवसर प्राप्त गर्दछन् । टेलिभिजनलाई टेलिफोनसँग सम्पर्क स्थापित गरी यसमा दोहोरो अन्तरक्रियाको व्यवस्था पनि गर्न सकिन्छ ।

नेपालमा दूर शिक्षाको स्थान महत्वपूर्ण छ । नेपालमा भौगोलिक विविधता एवम् जटिलता, गरिबी तथा जनचेतना कमजोर छ । त्यसैले औपचारिक शिक्षाको उज्यालो घामबाट वञ्चित र विभिन्न पेसा वा व्यवसायमा आबद्ध व्यक्तिहरूलाई दूरशिक्षाको माध्यमबाट आवश्यक ज्ञान, सीप, सिकाइ, दक्षता अभिवृद्धि गरी शिक्षाको अवसर बढाउन सकिन्छ । यसका साथै नागरिकहरूमा चेतना फैलाउन र विभिन्न अधिकार तथा कर्तव्यका बारमा सुसूचित गर्न पनि यो दूर शिक्षा प्रणाली उत्तिकै महत्वपूर्ण मानिन्छ ।

## ३. शिक्षामा सूचना र सञ्चार प्रविधि

**(ICT - Information Communication Technology in Edication)**

**परिचय**

सूचना तथा सञ्चारक्षेत्रका सेवाहरूको पहुँच व्यापक वृहत्तर र विस्तारित रूपमा उपभोक्ताहरूसम्म पुऱ्याउन कम्प्युटर, इन्टरनेट आदिमा आधारित प्राविधिलाई सूचना तथा सञ्चार प्रविधि (Infarmation and Communication Technologus -ICT) भनिन्छ । यस सूचना तथा सञ्चार प्राविधिलाई शिक्षाक्षेत्रमा प्रयोग गरी सिकारूको सिकाइ अवसरमा वृद्धि गरी लक्षित उद्देश्य हासिल गर्नुलाई शिक्षामा शिक्षाको एक उत्कृष्ठ र महत्वपूर्ण साधनको रूपमा लिइएको छ । शिक्षामा सूचना तथा प्रविधिको प्रयोग दृष्टिले निम्नानुसारको अभ्यास देखिन्छ ।

१. सेटलाइट (Satellite) मोडद्वारा दूर तथा खुला शिक्षा

२. वेभमा आधारि सिकाइ

३. ICT मा आधारित आधुनिक सिकाइ वातावरण, कार्यक्रम र सामग्री मानिसको ज्ञान, विभिन्न स्रोत र साधनहरू, शक्तिका स्रोतहरू प्राकृतिक घटना र मानवीय तथा भौतिक संसोधनहरूको उपयोग गर्दछ । यसले शिक्षाका साधन र माध्यममा परिमार्जन र पृष्ठपोषणको व्यवस्था गर्दछ ।

   शिक्षामा ICT को प्रमुख उद्देश्य भनेको शिक्षाक्षेत्रमा मानिसको सोचाइ र चिन्तनमा सकारात्मक परिवर्तन ल्याई आधुनिक भौतिक तथा मानवीय सम्भाव्य सबै स्रोतहरूको प्रयोग गरी लक्षित उद्देश्य हासिल गर्नु हो ।

**शिक्षामा ICT को आवश्यकता तथा महत्व**

१ ICT ले शिक्षक र सिकाइवीच निकटतम सम्बन्ध स्थापित गर्दछ ।

२. Chalk र talk मा अल्झिएको प्रविधिलाई श्रव्यदृश्य सामग्री (Audio-Visual Aid) पूर्ण प्रणाली (Whole Sustem) तर्फ डोऱ्याउँदछ ।

३. नीति, रणनीति र योजना तर्जुमा र कार्यान्वयनमा छिटो, छरीतो र आधुनिकीकरण गर्न सहयोग गर्दछ ।

४. शिक्षक तालिमलाई प्रभावकारी बनाउँदछ ।

५. कक्षकोठाको शिक्षण सिकाइलाई रुचिपूर्ण र वढी सूचनात्मक तथा छोटो समयमै धेरै विषयवस्तु प्राप्त गर्न अवसर प्रदान गर्दछ ।

६. शिक्षा व्यवस्थापनमा प्रभावकारीता ल्याउछ ।

यसरी समग्रमा ICT शिक्ष क्षेत्रका लागि वरदान नै सावित भएको छ । नेपालमा हाल विद्यालय तहमा एस.सी.डी., रेडियो, भिडियो, टि.भी., कम्प्युटर आदि मार्फत शिक्षा प्रदान गर्न कार्य थालनी भैसकेको छ । परीक्षणका रूपमा सामुदायिक विद्यालयमा विद्युतीय पाटी (E-Slate) को प्रयोग र अभ्यास भैरहेको छ । निजी तथा सरकारी क्षेत्रबाट अन्तरक्रियात्मक शैक्षिक सामग्रीहरू Interactive Educational meteriuts बनाई कार्यान्वयनमा समेत आएका छन् । इन्टरनेटको सुविधा गर्न सकिने अवस्था पनि रहेको छ ।

यसर्थ सारांशमा के भन्न सकिन्छ भने शिक्षामा सूचना तथा सञ्चार क्षेत्रको प्रभाव सकारात्मक रहेको छ । तर नेपालका सन्दर्भमा यसको पहुँच सामुदायिक विद्यालय र दुर्गम स्थान समेतमा पुऱ्याउन सकेमा अझ फलदायि हुने देखिन्छ ।

## २.२ शिक्षामा सामाजिक न्याय (Social Justice in Education)

### परिचय

सामाजिक न्यायले ठूलो-सानो, धनी -गरिव, मालिक -मजदूर, जात-जाती, रङ्गभेद आदिका आधारमा कुनै अवरोध बिना नै सवैमा समान व्यवहार गर्ने कुरालाई जनाउदँछ । यसरी समाजमा रहेका हरेक व्यक्तिका प्रकृति प्रदत्त नैसर्गिक अधिकारहरु शिक्षा, मानव अधिकार, बाल अधिकार आदिलाई सामाजिक न्याय भनिन्छ ।

शिक्षाको क्षेत्रमा समाजमा रहेका हरेक व्यक्तिले ठूलो-सानो, धनी -गरिव, मालिक -मजदूर, जात-जाती, रङ्गभेद आदिका आधारमा कुनै भेदभाव विना नै समानता र समता सहित शिक्षा प्राप्त गर्ने अवसर प्रदान गर्नुलाई शिक्षामा सामाजिक न्याय भनिन्छ । तल निम्नानुसारका विषय क्षेत्रमा सामाजिक न्यायमा वारेमा व्याख्या गरिएको छ ।

१. सवैका लागि शिक्षा

२. समाहित शिक्षा

३. बाल अधिकार

## १. सवैका लागि शिक्षा (Education for all)

### (क) परिचय

शिक्षाबाट कुनै पनि व्यक्ति तथा बालबालिकाहरू वञ्चित नहोस् भन्ने मूल उद्देश्य सबैका लागि शिक्षाले लिएको छ । सामान्य अर्थमा विद्यालय जाने उमेर पुगैका सबै बालबालिकाहरुले शिक्षा प्राप्त गर्ने वातावरण प्रदान हुनै व्यवस्थालाई सबैका लागि शिक्षा भनिन्छ । यसको पृष्ठभूमिलाई हेर्दा सर्वप्रथम सन् १९९० को मार्चमा थाइलैण्डको जोमटिएनमामा सबैका लागि शिक्षासम्बन्धी विश्व सम्मेलन भएको थियो । यसको कार्यान्वयनका लागि नेपालले आधारभूत तथा प्राथमिक शिक्षा परियोजना दोस्रो (BPEP II) कार्यान्वयन गऱ्यो । आधारभूत तथा प्राथमिक शिक्षा कार्यक्रम दोस्रोको कार्यान्वयनको क्रममा संयुक्त राष्ट्र सङ्घको सिनेगलको डकारमा सन् २००० को अप्रिलमा सम्पन्न शिक्षा विषयको विश्व फोरमले सबैका लागि शिक्षा अभियानका विभिन्न पक्षहरूबारे लेखाजोखा भयो । त्यसैका आधारमा ६ ओटा पूर्व लक्ष्यहरूलाई अझै स्पष्ट पार्नुका साथै सन् २०१५ सम्ममा ती लक्ष्य हासिल गर्ने प्रतिवद्धता पनि जाहेर भयो । परिमार्जित ‘‘सबैका लागि शिक्षा सन् २०१५ मा’’ मुख्य नारा थियो Education fo all : meetng the learning needs of all." यस अभियानलाई प्रभावकारी एवम् सशक्त बनाउन १२ ओटा बुँदा सहितको "Daker EFA Framework" निर्माण गरियो । यस आधारपत्रमा राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरको सामूहिक प्रतिवद्धता छ । जसअनुसार कुनै पनि राष्ट्रले उक्त ढाँचा (Fremework) बमोजिमको कार्यक्रम अपनाउन प्राविधिक क्षमता र स्रोतको अभावमा पनि पछि पर्नु दिनुहुँदैन भन्ने कुराको प्रतिवद्धता जनाइएको छ । यसैका आधारमा नेपाल सरकारले सबैका लागि शिक्षा कार्ययोजना नेपल (सन् २००१-२०१५) लाई स्वीकृत गऱ्यो । डकार कार्य ढाँचा र कार्ययोजनाले सबैका लागि शिक्षाका ६ ओटा लक्ष्यहरू र नेपालद्वारा छुट्टै एउटा लक्ष्य थप गरी उक्त कार्ययोजना बनाइएको थियो ।

सन् २००९ मा सबैका लागि शिक्षा कार्यक्रम (सन् २००४-२००९) सम्पन्न भइसकेको छ । परिवर्तित सन्दर्भमा सबैका लागि शिक्षा योजना, राष्ट्रिय कार्य योजना (सन् २००९-२०१५) र हालसम्मको अनुभवलाई मूल्याङ्कन गरी आधारमानी विद्यालय क्षेत्र सुधार योजना (वि.सं. २०६६-२०७२) निर्माण भइसकेको छ । हाल सबैका लागि शिक्षा कार्यक्रमकै निरन्तराका रूपमा विद्यालय क्षेत्र सुधार कार्यक्रम सञ्चालनमा छ ।

### (ख) सबैका लागि शिक्षाका लक्ष्यहरू

यस कार्ययोजनाले डाकार सम्मेलनबाट सन् २०१५ सम्मका लागि घोषित ६ ओटा प्रमुख लक्ष्यहरूलाई र नेपालको जातीय, भाषिक र सामाजिक विविधतलाई मध्य नजर गरी एउटा

लक्ष्य थप गरी आफ्नो सन्दर्भ अनुकूल निम्नानुसारका ७ ओटा लक्ष्यहरू निर्धारण गरेको थियो ।

१. विशेषत अत्यन्तै विपन्न र सुविधाविहीन बालबालिकालाई समेट्ने गरी प्रारम्भिक बालविकास शिक्षाका कार्यक्रमहरू एवम् व्यवस्थाहरूको विकास एवम् विस्तृतीकरण ।

२. सन् २०१५ भित्र सबै बालबलिका खास गरी बालबालिकाहरू, कठिन परिस्थितिका बालबालिका र अल्पसङ्ख्यक समुदायक बालबालिकाहरूका लागि स्तरीय, नि:शुल्क तथा अनिवार्य प्राथमिक शिक्षामा पहुँच र पूर्ण प्राप्ति सुनिश्चित गर्ने ।

३. सबै युवक तथा प्रौढहरूको आवश्यकताअनुसार उचित सिकाइ र जीवनोपयोगी सीपमूलक कार्यक्रमहरूमा न्यायोचित पहुँच विस्तार गरी सुनिश्चित गराउने ।

४. सन् २०१५ सम्म प्रौढ साक्षरता तहमा खास गरी महिला साक्षरतामा, कम्तिमा ५०% वृद्धि गर्ने र सबै प्रौढहरूका लागि आधारभूत तथा निरन्तर शिक्षामा न्यायोचित पहुँच पुऱ्याउने ।

५. सन् २००५ सम्म प्राथमिक तथा माध्यमिक तहसम्मको शिक्षामा लैङ्गिक विभेदीकरण निर्मूल गरी सन् २०१५ सम्म शिक्षामा लैङ्गिक समानता कायम गर्ने, छात्राहरूका लागि गुणस्तरीय आधारभूत शिक्षामा पहुँच र उपलब्धि सुनिश्चित गर्ने ।

६. गुणस्तरीय शिक्षाका सबै पक्षहरूसँग सम्बन्धित विशिष्ट एवम् मापन गर्न सकिने सिकाइउपलब्धिहरू खास गरी साक्षरता, गणितीय ज्ञान र जीवनोपयोगी सीपहरूको विकास सुनिश्चित गर्ने ।

७. आदिवासी, जनजाति र भाषिक अल्पसङ्ख्यक समुदायका लागि मातृभाषामा आधारभूत तथा प्राथमिक शिक्षा प्राप्त गर्न पाउने अधिकार सुनिश्चित गर्ने ।

## २. समाहित शिक्षा (Inclusive Education)

### (क) परिचय

सबैका लागि शिक्षा कार्यक्रमअन्तर्गत समाहित शिक्षा पनि पर्दछ । सबै बालबालिकाहरूका लागि विभेदरहित वातावरणमा बहुसांस्कृतिक भिन्नतालाई सम्मान गर्न, आफ्नै समुदायमा जीवनोपयोगी शिक्षा प्राप्त गर्ने अधिकारलाई सुनिश्चित गर्ने शैक्षिक पद्धतिको विकास प्रक्रियालाई समाहित वा समावेशी शिक्षा (Inclusive education) भनिन्छ ।

(UNESSO-Peris, 2000) का अनुसार "Inclusive education is a process of addressing and responding to the diversity of all learners in the classroom, in the school and on the society and there by readucing exclusion within and from education, no matter what causes for exclusion could be" यस परिभाषाले कक्षा, विद्यालय र समाजमा विभिन्न विविधतालाई समावेश गरी तथा ध्यान दिई कुनै पनि कारणले पछाडि परेका विद्यार्थीका असमानता हटाउने प्रक्रिया समावेशी शिक्षा हो ।

शिक्षाका दृष्टिकोणले हेर्दा समावेशी शिक्षाको प्रमुख उद्देश्य तथा मर्म भिन्न आवश्यकता, रुचि र क्षमता भएको विद्यार्थीहरूलाई आवश्यकता, न्यायोचित, समता र वास्तविकताका आधारमा समान महत्त्व दिएर दिइने शिक्षा नै समावेशी शिक्षा हो । जसरी चिनी, पानी र चिया पत्तिको समिश्रणबाट मात्र चिया बनाउन सकिन्छ । त्यसैगरी समाजमा रहेका भिन्न आवश्यकता, रुचि, क्षमता भएका व्यक्तिहरूको शिक्षाको विकास विना वास्तविक राष्ट्रिय लक्ष्य र शैक्षिक उद्देश्यहरू समेत प्राप्त हुन सक्दैन । समावेशी शिक्षाअन्तर्गत विशेष आवश्यकता भएका बालबालिकाहरू पनि पर्दछन् ।

सबैका लागि शिक्षाका कार्ययोजना, रणनीति पत्र, राष्ट्रिय तथा अन्तर्राष्ट्रिय प्रतिवद्धता तथा वर्तमानमा विद्यालय क्षेत्र सुधार कार्यक्रमसमेतले नेपालमा समाहित शिक्षाका विभिन्न कार्यक्रम सञ्चालन भइरकेको छ । संविधान, ऐन नियमहरूले पनि पिछडिएका समुदाय र विशेष आवश्यकता भएका व्यक्तिहरूको शिक्षालाई जोड दिएका छन् । सबैको संयुक्त प्रयासले केही उपलब्धि पनि हासिल भएका छन् । तर तुलनात्मक रूपमा यो क्षेत्र पछाडि परेको जनगुनासो पाइन्छ ।

### (ख) समहित शिक्षाको आवश्यकता तथा महत्व

समाहित शिक्षाको महत्व तथा आवस्यकतालाई तल वुदाँगत रुपमा उल्लेख गरिएको छ ।

१. समाहित शिक्षाले शिक्षाको अवसर नपाएका व्यक्तिहरुलाई शिक्षाको अवसर दिन्छ ।

२. यसले शिक्षामा एकिकृत दृष्ट्रिकोण र चिन्तन राख्दछ ।

३. राष्ट्रिय तथा अन्तराष्ट्रिय प्रतिवद्धता पुरा गर्न मद्दत गर्दछ ।

४. बालअधिकार र समग्र मानव अधिकारलाई कार्यान्वयन गर्न सहयोग गर्दछ ।

५. शिक्षण संस्थाहरुलाई समावैशी वनाई बालमैत्री बनाउन सहयोग गर्दछ ।

६. वालमनोविज्ञानको मर्मलाई बुझेर सामाजिक न्याय दिन सहयोग गर्दछ ।

७. सवै बालबालिकाहरुको सर्वाङ्गिण विकासमा सहयोग पुऱ्याउदछ । आदि ।

## ३. बालअधिकार (Child right)

### (क) परिचय

बालबालिका मानवसमुदायका विशिष्ट सदस्यहरू हुन् । बालबालिका आफ्नो बढ्दो उमेर र परिपक्वताका कारण विशेष अधिकारका हकदार हुन्छन् । यस्ता विशेष अधिकारले खासगरी बालयावस्थामा नै बालबालिकालाई चाहिने विशेष स्याहार र संरक्षण तथा उनीहरूको शारीरिक, मानसिक वा भावनात्मक, वौद्धिक तथा सामाजिक विकासलगायतका सर्वाङ्गीण विकासका लागि आवश्यक पर्ने अवसरहरूलाई वृद्धि गर्नमा जोड दिन्छ । सबै बालबालिकालाई बाल्यकालको सुखद् अनुभूति प्राप्त गर्दै भविष्यमा समाजमा एउटा सक्षम व्यक्तिगत तथा सामाजिक जीवन बाँच्न पूर्णरूपले समर्थ्य बन्न आवश्यक सबै सहयोग

पाउने अधिकार छ । सबै बालबालिका शान्ति, सम्मति, सहिष्णुता, समानता र एकताको भावनाका साथ लालनपालन र स्याहारसुसार पाउने अधिकार राख्दछन् ।

सरल रूपमा बुझ्दा बालबालिकाको उमेर अनि बढ्दो शारीरिक र मानसिक अवस्था अनुरूप बाल्यकालका आधारभूत आवश्यकता नै बाल अधिकार हुन् । बालबालिकाका यी आवश्यकताहरूले अहिले वर्तमानमा मात्रै नभएर उसको भावी वयस्क जीवनको खाका कोर्नमा समेत त्यत्तिकै महत्त्व राख्दछन् । बालबालिकाका यी विशेष आवश्यकताहरू पूरा गर्न बालबालिका छँदा नै उनीहरूले उचित स्याहारसुसार, माया-ममता, शिक्षा-दीक्षा प्राप्त गर्नुका साथै ज्ञान, सीप र दक्षता हाँसिल गर्ने अवसर पाउनुपर्दछ । बाल अधिकारको अवधारणाले यही कुरा भन्दछ ।

**परिभाषा**

बालबालिकाको बाँच्न पाउने अधिकार, दीर्घ जीवन र विकास गर्न पाउने अधिकार, सबै प्रकारका दूर्व्यवहार, शोषण, भेदभाव, हेला, उपेक्षा र तिरस्कारबाट संरक्षण पाउने अधिकार अनि आफ्नो विचार अभिव्यक्त गर्ने तथा आफूसँग सरोकार राख्ने विषय तथा सामाजिक गतिविधिहरूमा निर्णय प्रक्रियामा सहभागी हुन पाउनेलगायतका अधिकारहरूको समुच्च स्वरूप नै बाल अधिकार हो ।

## (ख) आधारभूत बाल अधिकार तथा सिद्धान्तहरु

सन् १९८९ को नोभेवम्बर २० का दिन संयुक्त राष्ट्रसङ्घ महासभाद्वारा संयुक्त राष्ट्र सङ्घीय बालअधिकारसम्बन्धी महासन्धि १९८९ मा पारित भई २ सेप्टेम्बर १९९० देखि लागू भएको हो । यसमा ५४ ओटा धाराहरू छन् । नेपालले यो महासन्धिलाई १४ सेप्टेम्बर १९९० मा अनुमोद गरेको थियो । यो महासन्धिको धारा १८ अनुसार बालबालिकाको पालनपोषणका लागि प्राथमिक दायित्त्व आमाबुबाको हुन्छ र यसलाई राज्यले पनि सहयोग गर्नुपर्दछ । यस महासन्धिको अनुमोदन पछि नेपाल सरकारले महासन्धिका बाल अधिकारसमेत समावेश गरी संवैधानिक व्यवस्था गरेको छ । यिनीहरूका आधारमा बालबालिकाहरूको हक र हितको संरक्षण गरी तिनीहरूको चौतर्फी विकास गर्न तथा समयानुकूल कानुनी व्यवस्था गर्न २०४८ सालमा बालबालिकासम्बन्धी ऐन २०४८ लागू गरी २०५० साल वैशाख १ गतेदेखि लागू भएको हो । यस ऐनलाई लागू गर्न बालबालिकासम्बन्धी नियमावली २०५१ पारित भई लागूसमेत भइसकेको छ । संयुक्त राष्ट्र सङ्घीय बाल अधिकारसम्बन्धी महासन्धि सन् १९८९, नेपाल अधिराज्यको संविधान (२०६३), बालबालिकासम्बन्धी ऐन २०४८ र बालबालिकासम्बन्धी नियमावली २०५१ मा व्यवस्था भएका बालअधिकारहरूलाई देहायका चार समूहमा विभाजन गरी सरल रूपमा अध्ययन गर्न सकिन्छ । यिनीहरूलाई नै आधारभूत बाल अधिकार भनिन्छ ।

१. बालबालिकाको जीवन बाँच्न पाउने र दीर्घ जीवनको अधिकार (Right to Survival)
२. बालबालिकाको विकासको अधिकार (Right to Development)

३. **बालबालिकाको संरक्षणको अधिकार** (Right to Protection)
४. **बालबालिकाको सहभागिताको अधिकार** (Right to Participation)

**यी चारओटा समूहमा पर्ने केही अधिकारहरूलाई देहायको तालिका-चित्रमा देखाइएको छ ।**

| **आधारभूत बाल अधिकार** | |
|---|---|
| १. **बाँच्न पाउने अधिकार**<br>▪ पौष्टिक आहार<br>▪ खोप र औषधि उपचार<br>▪ सुरक्षित जन्म र दर्ता<br>▪ सफा पानी पिउन पाउने | २. **विकासको अधिकार**<br>▪ शिक्षा आर्जन<br>▪ खेलकुद र मनोञ्जन<br>▪ जीवनोपयोगी सीप तथा कला<br>▪ स्वास्थ्य उपचार सेवा तथा सबै क्षेत्रको विषयमा सामान्य जानकारी |
| ३. **संरक्षणको अधिकार**<br>▪ गाली, कुटपिट, हेला र शोषणबाट संरक्षण<br>▪ धैरै काम तथा यौन शोषणबाट संरक्षण<br>▪ युद्ध, भैँ झगडा, देह व्यापार र किनबेचबाट संरक्षण<br>▪ लागूपदार्थ, हत्या र अपहरणबाट संरक्षण | ४. **सहभागीताको अधिकार**<br>▪ आफ्नो जीवनमा प्रभाव पार्ने निर्णयमा विचार राख्न पाउनु<br>▪ विचारको उचित कदर र मान्यता पाउनु<br>▪ विभिन्न सभा सम्मेलनमा समाजको हित हुने सामाजिक कार्यमा तथा सांस्कृतिक गतिविधिमा भाग लिन पाउनु |

**बालअधिकारका चार सिद्धान्त**

बालअधिकारका चार सिद्धान्तहरुलाई तल बुदागत रुपमा प्रस्तुत गरिएको छ ।

१. **भेदभाव गर्न नहुने**

यस सिद्धान्तले कुनै पनि किसिमको अपवादविना सम्पूर्ण अधिकारहरू सबै बालबालिकालाई सँधै उपलब्ध हुनेछ र हुनुपर्दछ भन्ने मान्यता राख्दछ । बालबालिकालाई उसको वा उसका बाबु-आमाको वा वैधानिक अभिभावकको जाति, रङ्ग, लिङ्ग, भाषा, धर्म, राजनैतिक वा अन्य विचारहरू, राष्ट्रिय, जातीय वा सामाजिक उत्पत्ति, सम्पत्ति, असक्तता, जन्म वा अन्य हैसियतको आधारमा भेदभाव नगरी समान अधिकारको प्रत्याभूति दिनुपर्दछ । सामान्यतया उत्तरदायित्व वहनकर्ता राज्य वा वयस्क संघ-संस्था, निकाय वा व्यक्तिहरूले बालबालिकाको हक-अधिकारको लागि कार्य गर्दा उनीहरूलाई कुनै पनि किसिमको भेदभावबाट जोगाउनुपर्दछ । यो सबैको कर्तव्य हो ।

२. **बालबालिकाको सर्वोत्तम हित**

यस सिद्धान्तले बालबालिकाको सम्बन्धमा गरिने सम्पूर्ण क्रियाकलापहरूले उनीहरूको सर्वोत्तम हितलाई मध्यनजर राखिनेछ भन्ने मान्यता राखेको छ । बाबु आमा वा अन्य जिम्मेवार मानिसहरूले बालबालिकाको हितमा काम गरेनन् भने त्यस्तो स्थितिमा राज्यले त्यस्ता बालबालिकाको आफैं स्याहारसुसार गर्ने, स्याहारकर्ताको सक्षमता बढाउने वा त्यसको लागि वैकल्पिक व्यवस्था गर्नुपर्दछ । यसरी हेर्दा यो सिद्धान्तको परिपालनाका लागि राज्यले बालबालिकाका परिवार, अभिभावक तथा समुदायका अन्य जिम्मेवार व्यक्तिहरूलाई उनीहरूका आफ्ना जिम्मेवारी बोध गराई बालबालिकाप्रतिका आ-आफ्नो दायित्व निर्वाह गर्न सक्षम बनाउँनुपर्दछ भन्ने देखिन्छ ।

३. **बाँच्न पाउने हक, दीर्घ जीवन र विकास**

यस सिद्धान्तले प्रत्येक बालबालिकाको स्वाभाविक बालापनको सुनिश्चितता गर्नु अनि उनीहरूको बाँच्न पाउने, दीर्घ जीवन र विकासको जन्मसिद्ध अधिकारको पूर्ण प्राप्तिमा जोड दिन्छ । बालअधिकारसम्बन्धी महासन्धिलाई अनुमोदन गरेर राज्यपक्षले बालबालिकाको बाँच्न पाउने, दीर्घ जीवन र विकासको अधिकारलाई यथासम्भव पूरा गर्ने अठोट गरेका हुन्छन् । प्रत्येक परिवार र अभिभावकले बालबालिकाको दीर्घ जीवन र समुचित विकासको निम्ति सुबिधा पुर्‍याउने आफ्नो दायित्व बुझी त्यसलाई पूरा गर्न कोशिस गर्नुपर्दछ । यस सिद्धान्तको सन्दर्भमा अनि समग्र बालअधिकारको सन्दर्भमा 'विकास' ले बालबालिकाको शारीरिक, मानसिक वा संवेगात्मक, आध्यात्मिक, नैतिक, मनोवैज्ञानिक र सामाजिक विकाससमेतलाई जनाउँछ ।

४. **बालबालिकाको विचार अभिव्यक्ति र त्यसको कदर**

यस सिद्धान्तले बालबालिकालाई आफ्नो जीवनसँग सम्बन्धित कुनै पनि कुरा वा कार्यविधिका सम्बन्धमा विचार प्रकट गर्न पाउने अधिकार छ भन्दछ । त्यसैगरी बालबालिकाको विचार अनि अभिव्यक्तिलाई जिम्मेवार व्यक्ति तथा निकायले उनीहरूको बढ्दो उमेर र परिपक्वताअनुरूप उचित कदर गरिनुपर्दछ । बालबालिकाको विचार अभिव्यक्तिको अधिकारलाई परिपालना गर्न, गराउन उनीहरूलाई निर्णय प्रक्रियामा सहभागी हुन पाउने वातावरण र अवसर प्रदान गर्ने उत्तरदायित्व वयस्क व्यक्ति र संघ-संस्थाको हो ।

## (ग) बाल अधिकारको आवश्यकता तथा महत्त्व

**बाल अधिकार बालबालीकाको भविष्यको आधार हो । हाम्रो देश लगायत विभिन्न देश र स्थानहरूमा बाल अधिकारहरूको हनन भइरहेका घटनाहरू प्रशस्तै पाइन्छन् । प्रत्येक बालबालीकाहरूले**

बालअधिकार बमोजिम बाँच्न र विकास हुने अवसर पाउनुपर्दछ । यदि यो भएन भने भोलि उनीहरूको भविष्य र राष्ट्रकै भविष्य कस्तो होला ? कल्पना गरी हेरौँ त ? यस तथ्यले बाल अधिकारको तत्कालीन तथा दीर्घकालीन महत्त्वलाई दर्शाउँदछ । वास्तवमा बाल अधिकारले बालबालीकाको शिक्षा स्वास्थ्य, पोषणलगायतका विविध क्षेत्रमा सहयोग पुऱ्याई अन्तर्निहित प्रतिभाको प्रस्तुत गर्न र सर्वाङ्गीण विकासलाई नै सहयोग पुऱ्याउदछ ।

बाल अधिकारको आवश्यकता तथा महत्त्वलाई तल बुदाँगत रूपमा प्रष्ट पार्न सकिन्छ ।

१. बाल अधिकारले बालबालीकाको शिक्षाको ग्यारेन्टि गर्दछ ।
२. यसले गर्भाअवस्था देखि नै उचित पालन पोषणको सुविधा दिलाएर शारिरिक र मानसिक रूपमा स्वस्थ्य हुन मद्दत गर्दछ ।
३. बालबालीकालाई खराव बानी ब्योहोरा, विभिन्न दूर्व्यशनहरूबाट जोगाई असल नागरिक वन्न सहयोग गर्दछ ।
४. बाल अधिकारले बालबालीकालाई सामाजिकरणमा सहयोग गर्दछ ।
५. बाल अधिकारले समाजमा भएको भेदभावलाई अन्त्य गर्न सहयोग गर्दछ ।
६. बाल अधिकारले न्यायपूर्ण समाजको निर्माण र विकास गर्न सहयोग गर्दछ ।
७. बाल अधिकारले सिकाइ क्रियाकलापमा स्वतन्त्रतापूर्वक सिक्ने अवसर सिर्जना गर्न मद्दत गर्दछ ।
८. विद्यालय, सिकाइ केन्द्र तथा अन्य सबै क्षेत्रमा हुने बाल हिंसाको अन्त्य गरी बाल मनोविज्ञान बमोजिम बालमैत्री सिकाइको वातावरण बनाउन र सिकाइ गर्न, गराउन मद्दत गर्दछ ।
९. सिकाइको पहुँच र गुणस्तरता बढाउन मद्दत गर्दछ ।
१०. बाल अधिकारले बालबालिकाको सर्वाङ्गीण विकास गराउन मद्दत गर्दछ । आदि ।

यसरी वास्तवमा बालअधिकार विश्वका प्रत्येक बालबालीकाहरूको भविष्य हो । यसले नेपालका बालबालीकाको सर्वाङ्गीण बालविकासमा कोशे ढुङ्गाका रूपमा काम गरेको र ठुलो योगदान समेत दिँदै आएको पाइन्छ ।

## (घ) बाल अधिकार सम्वन्धि भएका प्रगासहरु

१. **अन्तराष्ट्रिय प्रयासहरू**

- संयुक्त राष्ट्र संघबाट भएका प्रयास
  - बालबालिकालाई विशेष स्याहार पुऱ्याउनुपर्छ भन्ने कुरालाई बालबालिकाको अधिकार सम्बन्धी जेनेभामा १९२४ मा घोषणापत्र
  - संयुक्त राष्ट्र संघले १९५९ मा पारित गरेको बालबालिका सम्वन्धि घोषणापत्र
  - विश्वव्यापी मानव अधिकारको घोषणा, १९४८

- बालबालिकाको कल्याणमा समर्पित विशिष्ट सङ्गठन तथा अन्तर्राष्ट्रिय संस्थाहरूका ऐन र लिखतहरू
- माथि उल्लेख गरिएका बाल अधिकारलाई सशक्त रूपमा कार्यान्वयन गरी संरक्षण गराउन सदस्य राष्ट्रहरूलाई अनुरोध गऱ्यो । यसका ३ भागमा ५४ धारा रहेका छन् । यस मुख्यतया तीन कुरामा जोड दिएको छ :
  - ➢ बालबालिकाको लागि मौलिक मानव अधिकार - बाँच्न पाउने, मातापितासँग बस्न र भेटघाट गर्न पाउने, विचार राख्न पाउने, समानताको अधिकार, नाम र राष्ट्रियता पर्छन ।
  - ➢ बालबालिकाको लागि दूर्व्यवहार विरूद्धको अधिकार - यौन दुराचार, अपहरण, बेचविखन, शारीरिक, मानसिक एवम् आर्थिक शोषण विरूद्धका अधिकारहरू
  - ➢ बालबालिकाका लागि विकासको अधिकार - शिक्षा, स्वास्थ्य, सूचना, खेलकुद, अतिरिक्त क्रियाकलाप र संरक्षणको अधिकारहरू

२. **राष्ट्रिय प्रयासहरू**

- नेपालले संयुक्त राष्ट्र संघले १९५९ मा पारित गरेको बालबालिका सम्वन्धि घोषणापत्रलाई २० नोभेम्बर १९९० मा हस्ताक्षर गरी अनुमोदन गरेको छ ।
- शिक्षा ऐन २०२८ मा विशेष शिक्षाको व्यवस्था - अपाङ्गता भएका वालवालिकालाई विशेष प्रकारले शिक्षा दिने व्यवस्था गरेको छ । उदाहरणको लागि व्रेल लिपीमा पाठ्यपुस्तक उपलब्ध गराउने, सांकेतिक भाषामा संचार गर्न पाउने ।

- बाल बालिका सम्बन्धी ऐन, २०४८: यस ऐनले बालबालिकाको सम्पूर्ण विकासका लागि हरेक पक्षबाट कार्य गर्नुपर्ने व्यवस्था छ ।
- नेपालको अन्तरिम संविधान, २०६३
  - धारा १७ शिक्षा सम्बन्धी हक
  - धारा २२ मा बालबालिकाको हक
  - धारा ३५ (९) मा बालबालिकाको उन्नतिका लागि सामाजिक सुरक्षाको विशेष व्यवस्था नीतिमा
  - विशेष व्यवस्था गर्न सकिने धारा १३ (३) समानताको हक
- संघसंस्थाको प्रयास

  बाल अधिकार संरक्षण विकासका लागिा संघसंस्थाबाट विभिन्न गतिविधिहरू सञ्चालन भइरहेका छन् । अन्तर्राष्ट्रिय श्रम सङ्गठन, युनिसेफ, सेभ द चिल्ड्रेन, नेपालमा सिविन, जिल्लामा बालकल्याण समितिहरूबाट पनि बाल हित तथा कानुन कार्यान्वयनमा सक्रियता

बढाएका छन् तापनि बाल हिंसा, बाल श्रम, यौन दुराचार, बाल शिक्षा, बाल स्वास्थ्य, पोषण जस्ता समस्याहरूबाट बालबालिका गुज्रिरहेका छन् ।

## ३. केही नमूना प्रश्नहरू

यस एकाइको अन्तमा के कति बिषयवस्तुको ज्ञान हासिल भयो भनी तल उल्लेखित प्रश्नहरूको आधारमा मूल्याङ्कन गर्न सकिन्छ । यस एकाइबाट परीक्षामा सोध्न सकिने केही महत्वपूर्ण प्रश्नहरूको नुमनाहरू यस प्रकार छन् ।

१. शिक्षामा आधुनिक प्रवृत्ति भनेको के हो ? यिनीहरूको सूची बनाई कुनै एकको छोटो परिचय दिनुहोस् ।
२. औपचारिक शिक्षा र अनौपचारिक शिक्षाबीच अन्तर देखाउनुहोस् ?
३. जीवनपर्यन्त शिक्षाको महत्व व्याख्या गर्नुहोस् ।
४. नेपाली समाजमा शिक्षा व्यवस्थामा पत्राचार कार्यक्रमको महत्वबारे छलफल गर्नुहोस् ।
५. खुला सिकाइ भनेको के हो ? यसले औपचारिक शिक्षामा कसरी सहयोग पुऱ्याउन सक्छ ? प्रस्ट पार्नुहोस् ।
६. शिक्षामा आधुनिक प्रवृत्तिका रूपमा दूर शिक्षाको अवधारणा स्पष्ट पार्नुहोस् ।
७. औपचारिक शिक्षाका कमीकमजोरीहरू के-के हुन् ? प्रकाश पार्नुहोस् ।
८. नेपालमा निरक्षरता उन्मूलन गर्ने प्रमुख उपायहरू के-के हुन् ? शिक्षाका आधुनिक प्रवृत्तिका आधारमा टिप्पणी गर्नुहोस् ।
९. नेपालका सन्दर्भमा दूर शिक्षाको महत्वबारे चर्चा गर्नुहोस् ।
१०. जीवनपर्यन्त शिक्षाका सन्दर्भमा 'स्वअध्ययन' का बारेमा टिप्पणी लेख्नुहोस् ।
११. शिक्षामा सामाजिक न्याय भनेको के हो ? यसका प्रमूख कार्यक्रहरुका वारेमा छोटो व्याख्या गर्नुहौस् ।
१२. सवैका लागि शिक्षाको परिचय दिदैं यसका उद्देश्यहरु उल्लेख गर्नुहौस् ।
१३. बाल अधिकार भनेको के हो ? बाल अधिकारका वारेमा भएका राष्ट्रिय र अन्तराष्ट्रिय प्रयासहरुका वारेमा छोटो विवरण दिनुहोस् ।

## ४. उत्तर संकेत तथा विशेष सल्लाह

यी माथिका प्रश्नहरूको उत्तर प्रश्नहरूको क्रमअनुसार यस एकाइको विषयवस्तुको अध्ययनबाट दिन सकिन्छ । सकभर उत्तर दिंदा आफ्नो भाषा र विषयवस्तुको गहिराइमा गै दिनु पर्दछ । प्रश्नको उत्तर कति लेख्ने भन्ने कुरा लामो प्रश्न हो वा छोटो प्रश्न के हो त्यसलाई ध्यान दिई उत्तर

लेख्नुपर्दछ । जस्तै- प्रश्न नं. ११ को उत्तर दिनु पर्दा पहिले सामाजिक न्यायकौ छोटो परिचय दिने, आफूले अनुभव गरेको उदाहरण पनि दिदाँ झन् उपयुक्त हुन जान्छ । अनि यसका प्रमूख कार्यक्रहरुका वारेमा छोटकरी व्याख्या गर्नुपर्दछ । जुन कुरा माथि नै एकाइमा वर्णन गरिएको छ ।

यस एकाईको लागि सन्दंभ सामग्रीहरू :


१. आचार्य, बेदराज र धामी केशव सिंह (२०६४): शिक्षाको परिचय, वागबजार,काठमाडौं, रत्नपुस्तक भण्डार ।

२. वाग्ले, मनप्रसाद र ढकाल, माधव प्रसाद (२०५५) शिक्षाको प्रारम्भिक परिचय, भोटाहिटी, काठमाडौं: विद्यार्थी पुस्तक भण्डार ।

३. भट्टराई, होमनाथ (२०६५) शिक्षाको परिचय,काठमाडौं:,इन्क्लुसिभ प्रकाशक तथा वितरक प्रा.लि. ।

## एकाइ :सात
# पेसागत विकास

१. **एकाइ परिचयः**

हरेक पेसा,व्यवसायमा सफलता हासिल गर्नका लागि आफूले लागिपरेको कार्यसंग सम्बन्धित सबैखाले आधारभूत पक्षहरूमा दक्षता अभिवृद्धि गर्न सक्नुपर्दछ ।

२. **विषयवस्तुको सारः**

क. **शिक्षक शिक्षा र विकास**

हरेक पेसामा लाग्ने पेसाकर्मीले आफूले अंगालेको पेसाका लागि आवश्यक पर्ने आधारभूत देखि लिएर विशिष्ट पक्षहरूमा आफ्नो सक्षमता विकास गर्नु आवश्यक हुन्छ । समयसापेक्ष आउने समाजको आवश्यकता, विज्ञान प्रविधिको विकास र विस्तार आदि पक्षले हरेक पेसामा नयाँ आयाम र पक्षहरू थपिने गर्दछन् । त्यसैकारण एक पटक पेसामा प्रयोग सुरु गरिएका सीप,प्रविधि तथा स्रोत साधन समयको अन्तरालसंगै परिष्कृत र परिमार्जित हुने गर्दछन् । शिक्षण पेसा सहजै समाजको परिवर्तनसंग प्रत्यक्ष जोडिने भएकाले समाजमा आएका संस्कार,संस्कृति,भित्रीएका र प्रचलनमा आएका प्रविधि तथा उपकरण लगायतका सबै पक्षलाई शिक्षाले सम्बोधन गर्नु पर्ने हुन्छ । त्यसैले शिक्षकले आफूले कुनै समयमा सिकेको ज्ञान,सीप र प्रवृत्तिलाई समयअनुकूल परिमार्जन गर्नु आवश्यक पर्दछ । यदि यसो गर्न सकिएन भने आफू त अरुभन्दा पेसागत हिसाबले पछि परिन्छ नै । साथै परिवर्तित समाज र परिवेशवाट आएका विद्यार्थीहरू ,पाठ्यक्रम तथा पाठ्यपुस्तकले अपेक्षा गरेका लक्ष्य तथा उद्देश्यहरूको परिवर्तित सन्दर्भ अनुकूल पठनपाठन गर्न समेत कठिनाइ आइपर्ने हुन्छ ।

यी सबै यथार्थलाई मनन गरी शिक्षक शिक्षाका कार्यक्रमहरू सञ्चालन गर्ने गरिन्छ । पेसागत विकासमा व्यक्ति वा पेसा कर्मीले तोकिएको पेसाका रुपमा दैनिक रुपमा सम्पादन गर्नु पर्ने कार्यसंगमात्र सम्बन्धित नभई उसको जीवनका सबै पक्षहरूका लागि यो आवश्यक पर्दछ । त्यसैले निरन्तर पेसागत विकासमा लागि पर्ने र समाज र समयअनुसार सम्बन्धित पेसाका सवालमा देखा परेका सिर्जनात्मक परिवर्तन तथा उठ्ने गरेका सवालहरूको कारणको खोजी गर्ने व्यक्ति वा पेसाकर्मी नै सफल भएका उदाहरणहरू हाम्रा सामू देख्न पाइन्छ ।

## निरन्तर पेसागत विकासका तरिकाहरू

जीवन पर्यन्त सिकाइ र निरन्तर पेसागत विकास वास्तवमा एउटै जस्तो देखिन्छ । तर वास्तवमा पेसागत विकासका लागि तुलनात्मक रुपमा बढी स्तरीय र गुणस्तरयुक्त तथा बढी वैज्ञानिक तरिकाको प्रयोग गर्नुपर्ने हुन्छ । वृहत्त र सांसारिक समाजका सूचनाहरू तथा पेसाकर्मीका विकासात्मक क्रियाकलापहरूमा आएका परिवर्तनले कक्षाकोठाको शिक्षणसिकाइमा प्रभाव पारेको हुन्छ । त्यसैले प्रभावकारी र सफल शिक्षक बन्नका लागि यस्ता क्षेत्रका परिवर्तनसंग शिक्षकले आफूलाई साक्षात्कार र परिष्कृत गर्नु पर्दछ । परिवर्तनको सम्वाहकका रुपमा चिनिने शिक्षकहरूले समाजमा आएका सामाजिक , आर्थिक,सांस्कृतिक,प्राविधिक सबैखाले परिवर्तन र विकासलाई बुझ्ने र सृजनात्मक सुधार र परिमार्जनमा सहभागी हुने क्षमता राख्न सक्ने शिक्षक नै वास्तवमा सफल हुन सक्दछन् । परम्परागत सिकाइ तरिकाबाट माथि उठेर हाल प्रचलनमा आएका विभिन्न विद्यार्थी केन्द्रित उपागम,विधि तथा शिक्षणका तौरतरिकाहरूको कक्षाकोठा शिक्षणसिकाइमा उपयोग गर्ने सीप हासिल गर्नु आवश्यक पर्दछ । यसका साथै सूचना प्रविधिका क्षेत्रमा आएका नयाँ प्रयोगका सहायताले कक्षाकोठाको शिक्षणसिकाइको प्रभावकारितालाई बढी प्रभावकारी र सहज बनाउन सक्षम हुनु आवश्यक हुन्छ । पेसागत विकासका तरिकाहरूलाई विभिन्न पक्षबाट हेर्न सकिन्छ । जस्तै, पूर्वसेवाकालीन तालिम, सेवाकालीन तालिम, पूनर्ताजगी तालिम, कार्यथलोमा सहजीकरण आदि पर्दछन् । त्यसैगरी पेसागत विकासले व्यापक क्षेत्र ओगट्ने भएकाले अरुले गरेको पहलबाटमात्र हरेक व्यक्तिको पूर्ण रुपमा पेसागत विकास सम्भव नहुने भएकाले पेसाकर्मी स्वयम्ले स्वतन्त्र अध्ययन,कार्यानुभव, खोजी, अवलोकन, पेसागत छलफल,अन्तरक्रिया जस्ता विविध पक्षहरूमा लागि पर्नु पर्दछ ।  कुनै पनि पेसागत विकासका क्रममा निम्नलिखित चरणहरू पूरा गर्नु आवश्यक हुन्छ :






शिक्षकको पेसागत विकासलाई Gaible and Burns (2005) ले तीनओटा मुख्य प्रकारमा विभाजन गरेका छन् । ती हुन् -

- स्तरयुक्त शिक्षक पेसागत विकास **(Standardized TPD)**
- स्थलगत शिक्षक पेसागत विकास **(Site-based TPD)**
- स्वःनिर्देशित शिक्षक पेसागत विकास **(Self-directed TPD)**

स्तरयुक्त शिक्षक पेसागत विकास **(Standardized TPD)**

स्तरयुक्त शिक्षक पेसागत विकास सबैभन्दा केन्द्रिकृत परिपाटी हो । धैरै शिक्षकहरूका अगाडि सूचना तथा सीपहरूको प्रवोधीकरणका लागि यो तरिका सबैभन्दा उपयोगी हुन्छ । यसमा कार्यशालाहरू, तालिमका सत्रहरू तथा विभिन्न अवस्थाहरूमा माथिदेखि क्रमशः एक पछि अर्कालाई सीप हस्तान्तरण (The cascade model of scaled delivery ) पर्दछन् । त्यसैले तालिममा आधारित हुने यस्तो स्तरयुक्त शिक्षक पेसागत विकासले नयाँ धारणाहरूको विस्तार गर्ने तथा सीपहरूको नमुना निर्माण र प्रदर्शन गर्ने कुरामा बढी केन्द्रित हुने गर्दछ । यसले-

- शिक्षकहरूलाई नयाँ विचारहरू,कार्य गर्ने नयाँ तरिकाहरू तथा नयाँ सहकर्मीबीचमा परिचित गराउँछ ।
- देशव्यापि रुपमा वा क्षेत्रीय रुपमा शैक्षणिक विधिहरू एवम् ज्ञानको प्रवोधीकरण गराउँछ ।
- कुनै पनि योजना वा राष्ट्रको वचनबद्धता अनुसार तोकिएको कार्यलाई कार्यरुपमा देखिने गरी प्रदर्शन गर्छ ।

**स्थलगत शिक्षक पेसागत विकास (Site-based TPD)**

शिक्षक समूहले कुनै विद्यालय वा क्षेत्रमा गहिराइमा पुगेर गर्ने सिकाइ हो । यसबाट शिक्षणसिकाइ विधिहरूमा लामो समयका लागि परिवर्तनहरू ल्याउने र आफ्नो अन्तरदृष्टिलाई बढाउने कार्य हुन्छ । यो कार्यथलो अनुभबहरूको आदानप्रदान गर्ने र असल प्रयोगको उजागर भई अन्न परिस्थितिमा पनि त्यसको प्रयोग विस्तार गर्ने अवसर पनि हो ।

यो विद्यालयहरू भित्र, स्रोत केन्द्रहरू वा शिक्षकहरूका तालिम केन्द्रहरूमा सञ्चालन हुन्छ । शिक्षकहरू स्थानीय सहजकर्ताहरू वा अनुभवी र सक्षम शिक्षकहरूसंग बसेर कार्य गर्दछन् । सिकाइ प्रक्रियाहरूमा अझ बढी निखार ल्याउने, शिक्षण विधिहरूमा विशिष्टता निर्माण गर्ने, विषयवस्तु तथा प्रविधि सीपहरूमा अभ्यास गर्ने जस्ता कार्यहरू यस स्थलगत शिक्षक पेसागत विकास कार्यक्रममा सम्पन्न गर्ने गरिन्छ । यसमा शिक्षकले सामना गरेका निश्चित , परिस्थितिजन्य व्यक्तिगत समस्याहरूमा केन्द्रित हुने गर्दछ । कक्षाकोठामा गरिने शिक्षणसिकाइलाई सुधार गर्नका लागि नयाँ रणनीतिहरूको प्रयोग अभ्यास हुने गर्दछ ।
स्थलगत ढाँचाले -

- कुनै समयावधिको स्थनीय स्तरका सवालहरू तथा आवश्यकताहरूलाई सम्बोधन गर्ने गरी मानिसहरू -शिक्षकहरू ) लाई एक ठाउँमा ल्याउँछ ।
- समस्याहरू समाधानका लागि व्यक्तिगत तथा सहकार्यात्मक पद्धतिलाई प्रोत्साहित गर्दछ ।
- बढी लचकदार, टिकाउ हुने एवम् गहिराइयुक्त शिक्षक पेसागत विकास प्रदान गर्दछ ।
- निश्चित सङ्ख्याका शिक्षक समूहका बीचमा पेसागत सिकाइसम्बन्धी प्रदान गर्दै गरिएका अवसरहरू दिलाउँछ ।

**स्वःनिर्देशित शिक्षक पेसागत विकास (Self-directed TPD)**

स्वतन्त्र सिकाइ,कहिलेकाहीँ सिकारुबाट पहल गरिएका सोचहरू, उपलब्ध साधन र स्रोतहरूको उपयोग जसमा कम्प्यूटर तथा इन्टरनेटको समेत उपयोग हुन सक्दछ । शिक्षक स्वयम्ले आफ्नो पेसागत विकासका लागि पहल गर्ने र आवश्यक ढाँचा निर्माण गर्ने र सो अनुसार कार्य गर्ने गर्दछन् । आफूले संकलन,निर्माण गरेका सामग्रीहरू तथा विचारहरूको आदानप्रदान गर्ने, चुनौतिहरू र समाधानहरूमा छलफल गर्ने जस्ता कार्य गर्दछन् ।

**पेसागत विकासलाई नियमित गर्ने उपायहरूः**

पेसागत विकास र जीवनपर्यन्त शिक्षा धेरै हदसम्म एकै समान हुन् । तर जीवनपर्यन्त शिक्षाको खासै विशिष्ट लक्ष्य नहुने तर निरन्तर पेसागत विकासको भने गन्तब्यको मार्ग देखिने हुन्छ । निश्चित पेसागत घेरामा रहेर त्यसका लागि आवश्यक पर्ने ज्ञान,सीप र अभिवृत्तिलाई समय सापेक्ष विकास गर्दै जाने कुरा नियमित पेसागत विकासले समेट्दछ ।
शिक्षकको पेसागत विकासमा निम्नलिखित पक्षहरू देखापर्दछन् :

**विशेषज्ञहरू** (Exports )

विशेषज्ञहरूसंगको सम्पर्कबाट उनीहरूबाट सञ्चालन भएका सत्रहरूमा सहभागी भएर, यस्ता विशेषज्ञहरूबाट तयार पारिएका पुस्तक तथा सोधपत्र , प्रतिवेदन आदिको अध्ययन गरेर शिक्षकहरूले आफ्नो पेसागत सक्षमतामा थप उर्जा प्राप्त गर्न सक्दछन् ।

**प्रत्यक्ष कार्यशालाहरू** ( F2F Workshops):

विशेषज्ञहरू संगको अन्तरक्रिया जस्तै यसमा पनि अनुभवी पेसाकर्मीहरू तथा अनुभवी शिक्षकहरूसंग छलफल,विचार र सोचाइमा सम्बाद हुन्छ । वास्तविक कक्षाकोठाका क्रियाकलापहरूका लागि विचारहरू लैजाने र प्रतिविम्बन गर्ने गरिन्छ ।

**अनलाइन समूदायहरू** (Online communities ):

कम्प्यूटरमा आधारित भएर इन्टरनेट तथा भिडियो कन्फरेन्स लगायतको माध्यमबाट दुईतर्फी अन्तरक्रिया, छलफल प्रतिक्रिया गरी पेसागत विकासका सवालहरूको उजागर र अभ्यास गर्न सकिन्छ ।

**अनौपचारिक कुराकानी** :

अन्य शिक्षकहरूसंग भेटघाट गर्ने र एक अर्काका कक्षा शिक्षणसम्बन्धी विषयवस्तुहरू र पाठयोजनाका सम्बन्धमा छलफल गर्ने, उनीहरूले प्रयोगमा ल्याएका सहज खाले सामग्रीहरूको प्रभावकारी प्रयोगका सन्दर्भमा सरसल्लाह गरी नयाँ विचारको विकास गर्न सकिन्छ ।

**व्यक्तिगत अध्ययन** (Individual study ) :

अर्को सिकाइको सजिलो तरिकामा इन्टरनेटका सामग्रीहरू तथा छपाइका सामग्रीहरूको अध्ययनबाट आफूलाई आवश्यक परेको क्षेत्र र विषयवस्तुहरूको शिक्षणसिकाइका आवश्यक पक्षहरूको पहिचान र उपयोग गर्न सकिन्छ ।

**अध्ययन समूहहरू** (Reading groups) :

जब व्यक्तिगत रुपमा अध्ययन गरिन्छ त्यसबाट के सिकाइ भयो त्यसको निश्चित गर्नका लागि समूहमा छलफल अध्ययन हुन्छ । केही दिन या हप्ताका लागि कुनै विषयवस्तु व्यक्तिगत रुपमा अध्ययनका लागि दिइन्छ । तोकिएको दिन या हप्तामा समूहमा अध्ययन छलफल,अध्ययनबाट अनुभब गरिएका अनुभूतिहरूको आदानप्रदान गरिन्छ । यसका साथै अध्ययन सामग्रीले उठाएका सवालहरूमा छलफल गरिन्छ ।

**कार्यक्रमयुक्त कार्यमूलक अनुसन्धान** (Programmed action research) :

आफू कार्यरत संस्था वा विद्यालयले संस्थागत रुपमा तोकिएको क्षेत्रमा भएको कार्य प्रक्रिया र त्यसको नतिजाको अध्ययन गर्दछ । यसरी गरेको अध्ययनमा शिक्षकले सहयोग पुऱ्याउन सक्दैनन् । तर यसरी गरिएको अनुसन्धान कार्यको प्रतिवेदन अध्ययन गरेर आफ्नो पेसागत पक्षमा सुधारका लागि थप उर्जा प्राप्त गर्न सक्दछन् ।

**व्यक्तिगत कार्यमूलक अनुसन्धान( Individual action research )**

यो माथिको जस्तै भएतापनि यसमा शिक्षक स्वयम् निर्देशित हुन्छ । उसलाई वाध्यात्मक वा उसमाथि थोपर्ने कार्य गरिँदैन । कक्षाकोठामा आफैंले विद्यार्थीहरूसंग बसेर सम्पन्न गर्न सकिन्छ । यो ज्यादै सानो परिमाणमा विद्यार्थीहरूबा बारेमा अध्ययन गर्ने र उनीहरूबाट सिक्ने जस्ता शिक्षणसिकाइका पक्षहरूको ठूलो श्रृङ्खला हुन्छ ।

**सत्रहरू सञ्चालन (Giving sessions)**

यो विद्यालय भित्रको सानो भेटघाटदेखि लिएर ठूला अन्तराष्ट्रियस्तरका कन्फरेन्स सम्म हुन सक्दछन् । यसका शिक्षणसिकाइका विचार तथा तौरतरिकाका सम्बन्धमा सत्रका माध्यमबाट अनुभव आदानप्रदान गरिन्छ । यसमा सबै कन्फरेन्सका वक्ताले छोटो सुरुआत गर्ने र सबै शिक्षकहरूले केही नकेही भन्नु पर्ने हुन्छ । यसमा उठेका सवालहरूबाट यस अघि तय गरिएका योजना तथा अनुसन्धान कार्यहरूका लागि पृष्ठपोषण र छलफल हुन्छ भने आगामी दिनमा सञ्चालन गरिने कार्यक्रमहरूको विकासको लागि प्रभावकारी तरिका हो ।

**लेखन (Writing )**

माथि जस्तै, छोटा लेखहरूदेखि लिएर किताबहरूसम्म हुनसक्दछन् । एउटा डायरी राखेर त्यसमा गरिने टिपोटका आधारमा आफ्नो शिक्षणमा प्रतिविम्बन गर्नु राम्रो तरिका हो । यस्ता दैनिक डायरी अभिलेखले आफूले सञ्चालन गर्ने कार्यक्रम,तय गर्ने योजना तथा अनुसन्धानका लागि प्रशस्त खुराक उपलब्ध हुन्छ । यसरी संकलित तथ्यहरू यथार्थमा आधारित हुने हुँदा यसका आधारमा बनाइने कार्ययोजनाहरू बढी सान्दर्भिक र गन्तब्यको नजिक पुग्न सहयोगी हुन्छ ।

**औपचारिक कोर्स गर्ने (Doing a formal course)**

यो सामान्यतः पेसागत विकासका सन्दर्भमा मानिसले सोच्ने पहिलो सोच हो । तर समय र खर्चका आधारमा यो अत्यन्त कठिन पनि हुन सक्छ । यसका साथै यस्ता कोर्सहरूले अपेक्षा गरेका ठीक आवश्यकताहरूलाई नसमेटिएको पनि हुनसक्छ ।

**पेसागत निकायहरूको सदस्यता (Membership of professional bodies):**

यस्ता निकायहरूबाट पेसागत विकासका विभिन्न पक्षहरूका अवसरहरू तथा सहजीकरण उपलब्ध हुन सक्दछ । व्यक्तिगत र स्वतन्त्र रुपमा आफ्नो पेसासंग सम्बन्धित स्रोतसामग्री,सरसल्लाह आदि जस्ता सेवासहयोगका लागि ठूलो खर्च गर्नु पर्ने हुन्छ । यदि आफ्नो पेसासंग सम्बन्धित निकायहरूमा आवद्ध हुन सकेमा यस्ता पेसागत विभिन्न पक्षका सेवा र सुविधाहरू न्यून लागत वा विना लागत पनि प्राप्त गर्न सकिन्छ ।

**अन्य तरिकाहरू (Other ways)** :

- कुनै पनि पेसागत कार्य पहिलो पटक सुरु गर्नका लागि त्यस्ता नयाँ पेसागत क्रियाकलापमा पहिले संलग्न हुने,
- सहपाठीद्वारा अवलोकन गर्ने गराउने
- कक्षाकोठाको शिक्षणसिकाइमा फरक विधि तथा पद्धतिहरू प्रयोग अभ्यास गर्ने ,
- औपचारिक अनुगमन तथा कार्यक्रम नभएता पनि प्रतिविम्बनकारी तथा विस्तृतीकरणयुक्त अभ्यास गर्ने,
- शिक्षक प्रशिक्षकका रुपमा तालिम अभिवृद्धि गर्ने ,
- इ-शिक्षकका रुपमा अनलाइन कोर्स पूरा गर्ने ,
- पेसाकर्मीहरूको समूह रहेको परियोजनाहरूमा सहभागी हुने ,
- सत्रहरूलाई नयाँ तरिकाबाट नेतृत्व गर्न र उठेका सवालहरूमा छलफल गर्न स्थानीय समूह गठन गर्ने ।

अन्ततः पेसागत विकासका लागि थुप्रै पक्षहरू हुने गर्दछन् । यीमध्ये समय, लगानी,आवश्यकता जस्ता पक्षहरूलाई मनन गरी विभिन्न तरिकाबाट आफूलाई पेसागत रुपमा तिखार्दै जान सकेमा एउटा सफल पेसाकर्मीका रुपमा समाजमा स्थापित हुन सकिन्छ ।

**ख. शिक्षक तालिम (पूर्वसेवाकालीन, सेवाकालीन र पुनर्ताजगी )**

शिक्षकले एउटा परिस्थितिमा आर्जन गरेको ज्ञान,सीप र प्रवृत्तिको उपयोगबाट गरिने शिक्षणसिकाइले वर्तमान परिवर्तित समयका आवश्यकताहरूलाई सम्बोधन गर्न सक्दैन । त्यसैले हरेक व्यक्तिले आफूलाई समय अनुकूल थप ज्ञान,सीप,प्रवृत्तिमा अभ्यास गर्नु आवश्यक हुन्छ । शिक्षक तालिम पनि यसै मूलभूत उद्देश्य अनुसार सञ्चालन हुने गर्दछन् । यसरी दिइने शिक्षक तालिमहरू पूर्व सेवाकालीन,सेवाकालीन तथा पुनर्ताजगी खालका हुने गर्दछन् ।

**पूर्वसेवाकालीन तालिम :**

सेवा प्रवेशका लागि आवश्यक पर्ने ज्ञान,सीप र प्रवृत्तिहरूका बारेमा जानकारी लिने र सोही अनुसार आफूलाई अभ्यस्त बनाउनका लागि पूर्वसेवाकालीन तालिम दिने गरिन्छ । यसबाट सेवामा गरिने कार्यका लागि आत्मविश्वास वृद्धि हुने र आफूलाई तोकिने जिम्मेवारी निर्वाह गर्नमा सहजता आउँछ ।

शैक्षिक जनशक्ति विकास केन्द्रले सञ्चालन गरेको १० महिने पूर्वसेवाकालीन तालिम यसै प्रकारको हो । यस्ता तालिमहरू लामो तथा छोटा अवधिका हुने गर्दछन् । यस्ता तालिमहरुमा सामेल हुनका लागि आवश्यक स्रोत,साधन तालिममा सहभागी हुने व्यक्ति स्वयम्ले व्यवस्था गर्नु पर्ने हुन्छ ।

**सेवाकालीन तालिमः**

सेवामा प्रवेश गरिसकेपछि आफूले नियमित रुपमा गर्ने कार्यहरुमा कौशलता विकास गर्न र समय सापेक्ष पेसामा उपयोगमा आउने तौरतरिकाहरुमा अभ्यास गर्ने र पेसासंग सम्बन्धित सैद्धान्तिक आधारहरुको बारेमा स्पष्ट धारणा निर्माण गर्ने कार्यका लागि यस्ता सेवाकालीन तालिमहरुको व्यवस्था गर्ने गरिन्छ । सेवा प्रवेशका समयमा आवश्यक पर्ने ज्ञान, सीप र दक्षता पूरा नहुँदै सेवामा प्रवेश गरेका पेसाकर्मीहरुका लागि सेवाकालीन तालिम आवश्यक हुन्छ । साथै सम्बन्धित पेसामा आएका थप सुधार तथा परिवर्तनहरुका लागि आवश्यक पर्ने थप ज्ञान,सीप र दक्षताका लागि सेवामा प्रवेश गराउने पक्षले यस्तो तालिमको व्यवस्था गर्ने गरिन्छ ।

लामो अवधिका तालिमहरु ( पूर्वसेवाकालीन वा सेवाकालीन ) ले समग्र पेसाकर्मीहरुका लागि नभइनहुने आधारभूत ज्ञान, सीप तथा दक्षता बढाउने उद्देश्यले सञ्चालन गर्ने गरिन्छ । यस्ता तालिमहरु बढी समय,लागत लाग्ने गर्दछन् ।

**पुनर्ताजगी तालिम :**

लामो अवधिका तालिमहरु ( पूर्वसेवाकालीन वा सेवाकालीन ) ले समग्र पेसाकर्मीहरुका लागि नभइनहुने आधारभूत ज्ञान, सीप तथा दक्षता हासिल गरेका भएता पनि कार्यथलोमा कार्य गर्ने क्रममा देखापरेका विभिन्न समस्याहरु तथा पेसाका सवालमा प्रचलनमा आएका नयाँ ज्ञान,सीप तथा दक्षताहरुका सफल अभ्यासहरुलाई स्थानान्तरण गर्ने उद्देश्यले यस्ता छोटा अवधिका पुनर्ताजगी तालिमहरु सञ्चालन गर्ने गरिन्छ । यस्ता तालिमहरुले व्यक्ति विशेषका समस्याहरुलाई समेत सम्बोधन गर्ने प्रयास गर्दछ । हाल शिक्षकहरुका लागि सञ्चालनमा रहेको १०-१० दिने टिपिडि तालिम यस्तै खाले तालिम हो । यसमा हरेक शिक्षकका पेसागत

आवश्यकताहरुको संकलन गरी सोको आधारमा तालिमका विषयवस्तुहरु यकिन गरी तालिम सञ्चालन गर्ने गरिन्छ ।

**ग. शिक्षण अनुमतिपत्र**

शिक्षण पेसामा प्रवेश गर्नका लागि चाहिने आधारभूत सीपहरू र न्यूनतम दक्षताहरूको समेत नभएमा शिक्षण जस्तो सम्वेदनशील क्षेत्रमा प्रवेश गर्दा समस्त शिक्षा पद्धतिमा समेत त्यसको प्रभाव पर्ने अनुभव गरी शिक्षण अनुमतिपत्रको व्यवस्था गरिएको हो । शिक्षक सेवा आयोगले तोकिएका तह र योग्यताका आधारमा लिखित परीक्षाबाट उत्तीर्ण भएका व्यक्तिलाई यो अनुमतिपत्र प्रदान गर्दछ । यसको परीक्षामा बस्नका लागि शिक्षा संकायमा अध्ययन गरेको वा १० महिने तालिम पूरा गरेको हुनु पर्ने कुरा नियमावलीमा उल्लेख छ । यसरी शिक्षक सेवा आयोगबाट शिक्षण अनुमति लिएका व्यक्तिहरूले शिक्षक सेवका लागि उम्मेदवार बन्न सक्दछन् ।

**घ. पेसाका रुपमा शिक्षणका विशेषताहरू**

## ३. महत्वपूर्ण प्रश्नहरू

१. पेसागत विकास भनेको के हो ? नियमित पेसागत विकास किन गर्नु आवश्यक हुन्छ ?
२. पेसागत विकास गर्न सकिने क्षेत्रहरूको उल्लेख गर्नुहोस् ।
३. शिक्षकको पेसागत विकास हुनु किन आवश्यक पर्दछ ?
४. "प्रभावकारी शिक्षणसिकाइका लागि शिक्षकको पेसागत विकासको अवस्थाले ठूलो महत्व राख्दछ ।" यो भनाइलाई पुष्टि गर्नुहोस् ।
५. शिक्षक अनुमति पत्र र शिक्षकको पेसागत विकासबीच कस्तो सम्बन्ध हुन्छ ?
६. पेसागत विकास कस्ता कस्ता छन् ? वर्णन गर्नुहोस् ।
७. सफल शिक्षक बन्नका लागि तपाइँमा कस्ताकस्ता विशेषताहरू आवश्यक पर्दछन् ? उल्लेख गर्नुहोस् ।

## ४. उत्तरसङ्केत र महत्वपूर्ण सुझावहरू:

माथिका प्रश्नहरूको उत्तरका लागि यस एकाइमा दिइएका विषयवस्तुलाई प्रश्नका आधारमा एकएक गरी खोजेर क्रमशः पढ्नुहोस् । मुख्यमुख्य बुँदाहरू संभ्केर त्यसको बयान आफ्नै विचारबाट व्यक्त गर्नुहोस् । उत्तर लेखिसकेपछि एकपटक माथिका सम्बन्धित प्रश्नको उत्तरका बुँदाहरूलाई दोहोऱ्याएर आफ्नो उत्तरलाई परिमार्जन गर्नुहोस् ।